● वर्ष १० ● अङ्क ४ ● मङ्सिर २०६५ ● पूर्णाङ्क ११२

## सम्पर्क कार्यालयहरु


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**,
  पो.उ.म.न.पा.-१०, रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४०३३१
- **पाल्पा**, तानसेन,
  फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल,
  फोन:२२२००२१
- **गोरखा**, बसपार्क,
  फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर-९, शेराबजार
- **भक्तपुर**, कटुन्जे-१,
  फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, नाला जाने बाटो
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक,
  फोन: ०६१-५६०१६९
- **सिन्धुली**, रातमाटा
- **स्याङ्जा**, प्रगतिनगर घुम्ती
  फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे
  फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**

## अप्सरा विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौँमा रहेको छ । परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमबार र मङ्गलबार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलबार र बिहीबार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिबार र बुधबार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतबार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक वृहस्पतिबार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विशेष साधना : विभिन्न जिल्लाहरूमा विशेष साधना कार्यक्रम ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।


**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौं ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, कल्की मन्दिर, काठमाडौं, नेपाल**
**फोन नं: २०७१२००, २१००१५३, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: www.gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

समय काल परिस्थितिअनुसार देशको स्थिति परिस्थिति पनि विभिन्न मोडमा गुज्रेको पाइन्छ । हुन त व्यक्तिमा जबसम्म आध्यात्मिक भावभूमिले परिवर्तन ल्याउन सक्दैन, तबसम्म व्यक्तिबाट सोचेजस्तो उपलब्धिहरु प्राप्त गर्न सकिँदैन । चाहे समाजलाई नेतृत्व दिने कुरा होस् वा सरकारलाई नै नेतृत्व दिने कुरा होस् । प्रत्येकमा आध्यात्मिक भावभूमिको आवश्यकता पर्दछ । जहाँ त्यागको भावना हुन्छ, जहाँ व्यक्तिगत स्वार्थभन्दा माथि उठ्ने साहस गरिन्छ, त्यहाँ नै समाजको लागि केही गर्न सकिन्छ । व्यक्तिले जब परिवार समाजभन्दा माथि उठेर कार्य गर्न थाल्दछ, तब मात्र समाजले पनि केही प्राप्ति गर्न सक्दछ । व्यक्तिले पनि धेरै चीज गर्न सक्छ, गराउन सक्छ । आजको समाजमा यस्ता व्यक्तिहरुको धेरै खाँचो महसुस गरिएको छ ।

भौतिक भावभूमिबाट विकसित भएका व्यक्तिहरुमा केवल सीमित दायराको सोच, चिन्तन रहेको पाइन्छ । उनीहरुले केवल क्षणिक कुराहरु र भौतिक चीजहरुको प्राप्तिलाई नै ठूलो बनाइराखेका हुन्छन् । यस्तो सोचबाट जीवनको न त वास्तविक परिभाषा खोज्न सकिन्छ, न त जीवनलाई नै बुझ्न सकिन्छ । जीवनको उद्देश्य, मानव हुनुको अर्थ आदिको बारेमा जबसम्म बुझ्ने चेष्टा गरिँदैन, बुझ्नको लागि पहल गरिँदैन, तबसम्म मानव जीवनलाई अपुरो भन्दा फरक नपर्ला । यसैले व्यक्तिले आफ्नो जीवनलाई सही अर्थमा बुझ्नका लागि, यसको वास्तविक लक्ष्य उद्देश्य प्राप्तिका लागि अध्यात्मको सहारा लिनु अति नै आवश्यक छ । हुन त अध्यात्म भन्नेबित्तिकै व्यक्तिहरुले बुझ्दै नबुझी कुनै एउटा सीमित सोचलाई अथवा कुनै धर्म, संघ, सम्प्रदायलाई बुझ्ने गर्छन् । यसैभित्र अध्यात्म रहेको भनी ठान्छन् । आध्यात्मिक सोच आफैमा विराट् भावले समेटिएको छ । आध्यात्मिक चिन्तनभित्र नै मानव जीवनको गूढ रहस्य लुकेको छ, जीवनको सार्थकता छिपेको छ ।

आध्यात्मिक संसारमा अगाडि बढ्नको लागि सद्गुरुको आवश्यकता पर्दछ । गुरुको मार्गनिर्देशनमा नै एउटा सामान्य व्यक्तिले जीवनको परिभाषा बुझ्न सक्छ, जीवनको लक्ष्य उद्देश्य बुझ्न सक्दछ । यति मात्र होइन, जीवनलाई पूर्णतामा लैजान सक्दछ । अध्यात्मको सामान्य कुरा बुझ्दैमा मात्र व्यक्तिले उच्चता हासिल गर्न सक्दैन । व्यक्ति चाहे जति नै विद्वान् होस् वा तपस्वी, बिना गुरु उसले आध्यात्मिक यात्रालाई पूर्णतामा लैजान सक्दैन । यसैले हाम्रा प्रत्येक धर्मशास्त्रले सद्गुरुको शरणमा जाने सल्लाह दिन्छन्, प्रेरणा दिन्छन् । त्यसैले तपाईंले पनि यदि सद्गुरुको छत्रछायाँ प्राप्त गर्नुभएको छैन भने अर्थात् सद्गुरु भेट्नुभएको छैन भने आउनुहोस्, तपाईंहरुलाई हामी सहयोग गर्छौं । सद्गुरुदेवसँग जोड्नको लागि आवश्यक वातावरण बनाउनको लागि पहल गरिदिन्छौं । सद्गुरुलाई प्राप्त गरौं, जीवनलाई पूर्णतामा लैजाऔं ।

यसपालिको अंक हामीले 'अप्सरा विशेष'को रुपमा तपाईंहरुको हातमा ल्याउन सफल भएका छौं । हुन त अप्सराको बारेमा हाम्रो समाजमा कैयौं गलत धारणाहरु पनि रहेको पाइन्छ । अप्सराहरुले मानव जीवनलाई उच्चतामा लैजानको लागि जीवनमा खुशी आनन्द उत्साह उमंग जोश जाँगर आदि प्रदान गर्दै सहयोगीको रुपमा, मार्गनिर्देशकको रुपमा पनि कार्य गरेको पाइन्छ । अप्सराले व्यक्तिको जीवनमा परिवर्तन ल्याउनको लागि साधना, ध्यानलगायत तपस्यामा उच्चता हासिल गर्नका लागि पनि ठूलो मद्दत पुऱ्याइरहेका हुन्छन् । समाजमा अप्सराहरु तपस्याका बाधक, साधनामा उच्चता पाउनको लागि अवरोध सृजना गर्ने आदि भ्रम रहेको पाइन्छ । विषय प्रसंगलाई बुझ्दे नबुझी अप्सराहरुको वास्तविक स्वरुपलाई थाहै नपाई अज्ञानताको भरमा अनावश्यक टीका टिप्पणी गर्नु व्यक्तिको न्यूनताबाहेक केही हुन सक्दैन । त्यसैले जीवनलाई पूर्णतामा लैजानको लागि, जीवनलाई गतिशील बनाउनका लागि, जीवनको वास्तविक आनन्द लिनका लागि अप्सराहरुको सहयोग लिन तपाईं हामी पनि पछि नपरौं ।

अन्त्यमा यस अप्सरा विशेषमा हामीले स्थान अभाव एवं अन्य विविध कारणले गर्दा पनि अझै अप्सराहरुसम्बन्धी गूढतम कुराहरु समेट्न सकेनौं । जे जति विषय प्रसंगहरु समेट्न सकियो, त्यसलाई मात्र पूर्णता नठानिदिनुहोला साथै यस अंकमा भएका कमी कमजोरी न्यूनताहरुको लागि यहाँहरुसँग र परमपूज्य सद्गुरुदेवहरुसँग क्षमा माग्दै यहाँहरुको सल्लाह सुझावको पनि आशा राख्दछौं । अस्तु ।

ब्रह्माण्डको संरचनाअनुसारका विभिन्न लोकहरूमध्ये अप्सरा लोक पनि एउटा हो । अप्सरा भन्नासाथ नै सौन्दर्यको प्रतीक मानिन्छ । सुन्दरताको उपमा दिनुपर्‍यो भने अप्सराजस्तो राम्रो भन्ने गरिन्छ । शास्त्र-पुराणहरूमा विशेष गरेर तपस्वीहरूको तपस्या भङ्ग गराउन इन्द्रले अप्सराहरू पठाएका प्रसंगहरू पाइन्छन् । तपस्या भङ्ग गराउन प्रयोग हुने भएकाले अप्सराहरूलाई नराम्रो रूपबाट पनि शास्त्रमा चित्रण गरिएको छ । कुराहरू बङ्ग्याइएको छ । यहाँ सोचनीय कुरा के छ भने अरूलाई राम्रो हुनबाट वञ्चित गराउने, दुःख दिनेहरू असुरलोकमा हुन्छन् भने राम्रै राम्रा गर्नेहरू देवलोकमा । यदि अप्सराहरू खराब भइदिएको भए त उनीहरू देवलोकमा नभएर असुरलोकमा हुनुपर्ने हो । देवराज इन्द्र शक्तिका प्रतीक हुनुहुन्छ, देवताहरूका राजा हुनुहुन्छ । उहाँसँग असंख्य शक्तिहरू छन् । देवताहरूले पनि नतमस्तक भएर उहाँको आज्ञाको पालन गर्नुपर्छ, हैन भने देवराजसँग भएको शक्तिले उनीहरूलाई परास्त गरी श्रापित गर्न सक्छ । त्यस्तो विशेष अधिकार देवराज इन्द्रले प्राप्त गरेकाले उहाँले भने को सबैले मान्नुपर्ने हुन्छ । देवराज इन्द्रका पनि आफ्नै बाध्यता, विवशताहरू रहन्छन्, हामीले त्यसतर्फ पनि दृष्टि पुर्‍याउनुपर्दछ । उहाँभन्दा माथिल्लो सत्तामा पनि अरू शक्तिहरू छन् । 'तपाईंले यस्तो आदेश दिनुपर्‍यो' भनेर माथिल्लो तहबाट आदेश प्राप्त भएपछि त्यसमा फेरि 'किन दिने ? कसरी दिने ? त्यो गरेर के हुन्छ ?' भनेर सोध्ने प्रश्नै उठ्दैन । देवराज इन्द्रले माथिको आदेश पालना गर्नुपर्दछ भने अप्सराहरूले देवराज इन्द्रको ।

कोही पनि व्यक्ति यदि तपस्यामा अघि बढ्दछ भने उसलाई हरेक प्रकारका परीक्षाहरू हुने गर्छन् । तीमध्ये एउटा परीक्षा कामवासनासम्बन्धी पनि हुन सक्दछ । तपस्वी बनेर तपस्यामा अघि बढिरहेका ऋषिमुनिहरूले सबैलाई आफ्नो वशमा राखे तर आफ्ना इन्द्रियहरूलाई चाहिँ जिते कि जितेनन् भनेर परीक्षा लिने क्रममा अप्सराहरूको प्रयोग हुनसक्छ । ती अप्सराको सौन्दर्यमा नै लट्ठ भई, आसक्त भएर कतिपयले आफ्नो तपस्या स्थगित गरे होलान् । उक्त परीक्षामा तिनीहरू असफल भए । ती असफल हुने ऋषिमुनिहरूको पक्षमा लेखिएका शास्त्रहरू रहेछन् भने त्यहाँ अप्सराको विषयमा भिन्न प्रकारले चित्रण गरिएको पनि हुन सक्दछ । त्यस्तै अप्सराकै माध्यमबाट सफलता हासिल गरेर उच्चतम अवस्थामा पुगेका पनि कतिपय छन्, त्यस्ता व्यक्तित्वहरूका शास्त्रहरू चाहिँ हामीले पढ्न पाएनौँ होला । ती असफल भएकाहरूको अनुभव सम्प्रेषित गरिएका शास्त्रहरू पढेको आधारबाट अप्सराहरू नराम्रा हुन्, तपस्या भङ्ग गर्छन् भनेर आँकलन गर्नु हाम्रो न्यूनता हुन्छ । अप्सराको माध्यमबाट विशेष गरेर तपस्यामा लाग्नेहरूले धेरै उच्चता हासिल गर्न सक्छन् र गरेका पनि छन् । अप्सराहरूले ऋषिमहर्षिहरूबाट नै पनि आशीर्वाद प्राप्त गरेका हुन्छन् । कुनै ऋषिसित कुनै अप्सराको विवाह भएको प्रसंग पनि पाइन्छ । विवाह गरेपछि समकक्षी भए, अर्धांगिनी भए, अर्धांगिनीस्वरूप भइसकेपछि स्वतः नै श्रीमान् श्रीमतीको सिद्धि शक्ति एकअर्कामा जाने भयो र ऋषिमुनिसँग जति पनि क्षमता छन् उनीहरूलाई स्वतः नै प्राप्त हुने भयो । अप्सराहरूको प्रावधान कस्तो रहेको छ भने उनीहरू सधैँ जवान नै रहन्छन्, कहिल्यै बूढा हुँदैनन्, कुनै पनि प्रकारको दोष हुँदैन, शुद्ध पवित्र रहन्छन्, जस्ताको तस्तै रहन्छन् यस्तै वरदान पाएका छन् । उनीहरूलाई हजारौँ वर्ष अगाडिका गूढ सूत्रहरू पनि थाहा हुन्छ । कसैलाई कुनै प्रकारको सहयोगको आवश्यकता पर्‍यो भनेमा उनीहरूले सहयोग गरिदिन सक्छन् । अप्सराहरूको माध्यमबाट, संसर्गबाट, सानिध्यताबाट हामीले धेरै फाइदा लिन सक्छौँ । संसर्ग भन्नासाथ व्यक्तिहरूले कामवासनामा लिप्त भई अप्सरासँग लुटपुटिने भन्ने ठान्दछन् । अप्सराहरू भनेका सौन्दर्यको विशेष शक्तिस्वरूप हुन् । कमजोर मानसिकता भएका, विशेष गरी कामभावनामा कमजोर पुरुषहरू छन् भने अप्सराको नजिक पर्नासाथ नै पूर्णरूपबाट कमजोर भई भङ्ग हुन्छन् । आफ्नो वीर्यको

**अप्सराहरुको प्रावधान कस्तो रहेको छ भने उनीहरू सधैँ जवान नै रहन्छन्, कहिल्यै बूढा हुँदैनन्, कुनै पनि प्रकारको दोष हुँदैन, शुद्ध पवित्र रहन्छन्, जस्ताको तस्तै रहन्छन् यस्तै वरदान पाएका छन् ।**

संरक्षण गर्न नै सक्तैनन् । त्यस्ता कमजोर भावना हुनेहरूलाई त उनीहरूको उपस्थिति नै काफी हुने हुन्छ । त्यसैले त्यस्ता व्यक्तिहरू अप्सराको संसर्गबाट तपस्यामा असफल हुन्छन् । दृढ इच्छाशक्ति हुनेहरू त अप्सराले जस्तोसुकै हतकण्डा अपनाए पनि परीक्षामा उत्तीर्ण हुन्छन्, सफलता प्राप्त गर्दछन् । सौन्दर्यको प्रतीक, अत्यन्त ओजस्वी-तेजस्वी स्वरूप भएको हुनाले उनीहरूको उपस्थिति हुनासाथ नै सबै गल्दछन् । यस अर्थमा अधिकांश असफल भएर थोरै मात्र सफल हुन सक्दछन् । अप्सराको सहयोग पाएर वशिष्ठ ऋषि उच्चकोटिमा पुगे, विश्वामित्र ब्रह्मर्षि भए । शास्त्रहरूमा अप्सराको तर्फबाट भएका राम्रा कुराहरूको चित्रण त्यति भएका छैनन्, असफल भएकाहरूको चित्रण मात्र भएकाले हामीलाई नराम्रो जस्तो लाग्न सक्छ । वास्तविकरूपमा अप्सराको सान्निध्यबाट, संसर्गबाट उच्चतम अवस्थामा पुग्न सकिन्छ ।

तपस्या नै नहुनेहरूलाई अप्सराले वास्तै गर्दैनन् । जो उच्चकोटिका तपस्वी छन्, जो ऋषिमुनि परम्परामा हुर्किरहेका हुन्छन्, विशेष गरेर जो तपस्वीले देवलोकलाई पनि पार गरेर अझ माथि जान लागिरहेका हुन्छन्, यस्ता साधकहरूसँग नजिक हुने, भेट्ने, सहयोग गर्ने अभिलाषा अप्सराहरूमा हुन्छ । यस्तो व्यक्तिको सम्पर्कमा उनीहरू आउन खोजिरहेका हुन्छन् । अप्सराले दर्शन दिने क्रममा पहिले सपनाको माध्यमबाट सम्पर्कमा आउँछन्, उनीहरू विपनामा पनि देखिन सक्छन्, सबै हतकण्डा अपनाउँदा अपनाउँदै पनि असफल भए भने कुनै साधिकाको शरीरमा प्रवेश गरेर, त्यहाँ धारण भएर त्यसको माध्यमबाट पनि हाउभाउ देखाउन सक्छन् । त्यसरी हाउभाउ प्रकट गर्दा साधिकाको शरीरलाई पनि फाइदा पुग्ने भयो । उनीहरूको आगमनसँगै एक प्रकारको चमक, आकर्षण अनि सौन्दर्यलगायत शारीरिक बनावट पनि अदलबदल हुन्छ । यस रूपबाट फाइदा त हुने भयो तर त्यसबेला भएका कमी, कमजोरी, त्रुटीहरूको हकदार त त्यो शरीर पनि हुने भयो । यस्तो अवस्थामा कि त आफूले यो ठीक यो बेठीक भनेर ठम्याउनुपर्‍यो, होइन भने साधनात्मक उच्चता प्राप्त गरेको कोही व्यक्ति (माध्यम) लाई म यस्तो अवस्थामा छु भनेर भन्नुपर्‍यो । जसरी झुण्ड्याएर राखिएको बल्बमा विद्युत् प्रवाहित हुनासाथ नै स्वत: त्यो बल्ब बल्न थाल्दछ र बलिसकेपछि वरिपरिको अँध्यारो आफसे आफ हट्दछ, त्यस्तै कुनै पनि देहमा उनीहरूको आगमनसँगसँगै हजारौं भोल्ट बराबरको आकर्षण शक्ति आउँछ अनि त्यो शक्तिले जो कोहीलाई पनि आकर्षित गर्ने भयो, कमजोर मानसिकता हुनेहरू त्यहीं असफल हुने भए । शरीरमा आउँदा भएका विभिन्न घटना, परिघटनाहरू त त्यो देहले पनि भोग्ने भयो । त्यस्तोमा संयमित हुँदै के भइरहेको छ भनेर आफूले आफ्नै अनुसन्धान गर्दै गर्दै माथि जानुपर्दछ । यस परिवेशमा साधक पनि असफल हुन सक्दछ, साधिका पनि असफल हुन सक्दछे ।

ब्रह्माण्डमा राम्रा नराम्रा सबै विषयवस्तु सृजना भएका छन् । सबै राम्रै राम्रो मात्र हुने हो भने त्यसको कुनै महत्त्व हुँदैन । कोही राम्रो हुनुपर्छ, कोही नराम्रो । सुख र दु:खको मिश्रण हुँदा रोमाञ्चक भएको जस्तै ब्रह्माण्डलाई एउटा रोमाञ्चकता प्रदान गर्नको लागि सौन्दर्यका चीजबीजहरूलाई पनि एक ठाउँमा संग्रह गरेर राखियो । सौन्दर्य जतातत‌ै हुँदा कोही पनि माथि जान नखोज्ने भयो । एउटा उच्चतम अवस्थामा पुगिसकेपछि मात्र प्राप्त गर्ने गरी एउटा मापदण्डमा राखिदिएपछि त्यसबाट परीक्षा

पनि हुने भयो, अनि त्यसलाई पार गर्नेहरू माथि जान पाउने भए । अनि उनीहरूले केही बताएको आधारमा अरूलाई पनि म यति उच्चकोटिको हुन पाए त फलानो चीज हेर्थें भनेर उत्सुकता भएर त्यसलाई हेर्न, देख्न, भोग गर्न, नजिक हुनको लागि पनि कोही तपस्वी भएर माथि आउने भए । त्यही एउटा अप्सराको सौन्दर्य विषयवस्तुको माध्यमबाट पनि त्यहाँ विकास हुने भयो, अझ उन्नति प्रगति हुँदै जाने भयो ।

अप्सराहरूलाई आमा भन्नुहुन्न, छोरी भन्नुहुन्न, यिनीहरूलाई जहिले पनि प्रेमिकाको रूपमा चलनचल्तीको भाषामा भन्दा गलफ्रेण्डको रूपबाट निकटतम अवस्थासम्म पुऱ्याउनुपर्छ भनेर शास्त्रले पनि भनेका छन् । समाजमा जान्ने सुन्ने व्यक्तिहरूले पनि यस्तै कथा प्रसंगहरू भनिदिने भएकाले समाजमा विशेष गरेर युवा वर्गमा अप्सरा भन्नासाथ यसलाई भोग गर्न पाए हुन्थ्यो भन्ने इच्छा जन्मिएर त्यसलाई पाउन साधना, तपस्या गर्दै जान सक्दछन् । यदि उनीहरू योग्य बन्दै गए भने उनीहरूले जुन रूपमा परिकल्पना गरेका छन् सोही बमोजिम प्रेमिका अथवा श्रीमतीको रूपबाट अप्सराहरू आउन सक्दछन् । त्यसपछि श्रीमान् श्रीमतीबीच हुने जे जति क्रियाकलापहरू छन् त्यो पनि उनीहरू बीच हुन सक्दछ । भौतिक सत्तामा हामी कामवासनाले लिप्त भएको हुनाले उनीहरूको उच्चतम अभिव्यक्तिको स्वरूप शारीरिक सम्बन्ध कायमबाट प्राप्त हुने आनन्द भन्ने ठान्छौं । यौन सम्पर्कबाट प्राप्त हुने आनन्द त क्षणिक हुन्छ, केही सेकेण्डको हुन्छ । त्यो त देवस्वरूपमा प्राप्त हुने आनन्दको तुलनामा करोडौं अंशको एक अंशमा पनि पर्दैन । देवस्वरूपमा त उनीहरूमा दृष्टि पर्दा, हेर्दा, देखेको भरमै, सान्निध्यता प्राप्त गर्दा नै लाखौं गुणा बढी आनन्द प्राप्त भइरहेको हुन्छ । भौतिकरूपमा अप्सरालाई प्राप्त गरी कामवासनाले लिप्त भइरहनेहरू त देवस्वरूपको निकट त पुग्नै पाउँदैनन् । त्यसको लागि तपस्वीहरू त्यही स्तरसम्म पुग्नु पर्दछ । अब अप्सरालाई कुन रूपमा लिने भन्ने सन्दर्भमा चाहिँ धेरैले श्रीमतीको रूपमा अपनाउन पाए हुन्थ्यो भनेर साधना गर्छन्, त्यसमा कतिले सफलता प्राप्त गरेका छन् भने कतिले प्राप्त गरेका छैनन्, त्यो आफ्नो ठाउँमा छ । तैपनि अहिलेको समयमा उनीहरूको आकर्षणबाट आकर्षित भई एउटा लालच चाहिँ सबैले राखेका हुन्छन्, कसैले बाहिर व्यक्त गर्छन्, कसैले गर्दैनन् । त्यस रूपबाट हेर्दा साधकहरूले उनीहरूबाट एउटा किसिमले फाइदा लिने भए भने साधिकाहरूले अर्को किसिमले फाइदा लिने भए । उनीहरू पनि त्यही रूपबाट प्रस्तुत भएर साधनामा उच्चता प्राप्त गर्नलाई सहयोग पुऱ्याउन सक्छन् ।

जय गुरुदेव !

# अनिन्द्य सुन्दरी उर्वशी

अप्सरा शब्द सुन्नेबित्तिकै हामी कल्पनाको लोकमा विचरण गर्दछौँ, हाम्रो मानसपटलमा विभिन्न प्रकारका विचार आउन लाग्दछन् जसले हामीलाई यो सोच्न बाध्य गर्दछ कि कस्तो हुन्छ होला त्यो अप्रतिम सौन्दर्य ?

त्यो अप्रतिम सौन्दर्य शायद यस्तो होला जसलाई देखेर व्यक्ति अवाक् रहन पुगोस्... अद्‌भुत र आश्चर्यजनक होला त्यो ! वा त्यो सौन्दर्य यस्तो होला कि जसलाई देखेर हृदयले धड्‌कन बन्द गरोस्, श्वास अड्‌कन पुगोस्... यस्तो अनौठो सौन्दर्य ! यस्तो सौन्दर्यलाई प्राप्त गर्न कसको इच्छा हुँदैन ? कसले यस प्रकारको सौन्दर्य हेर्न मन नगर्ला ?

यस प्रकारको सौन्दर्यको साक्षात्कार देवताहरूले गर्नुभएको छ। ऋषिहरूले त्यस नारी सौन्दर्यलाई आफ्नो कल्पनाशक्ति र उहाँहरूको अन्तर्मनमा प्रस्फुटित आनन्द, सौन्दर्यको उद्वेगबाट आपूरित भएर आफ्नो मनको अभिव्यक्तिलाई फरक-फरक ढंगले प्रस्तुत गर्नुभएको छ जसको आधारमा साधारण मानवले केवल यस्तो होला त्यो सौन्दर्य, उस्तो होला त्यो सौन्दर्य जसलाई देखेर हाम्रा पूर्वज, ऋषि, देवताहरू र कवि मन्त्रमुग्ध हुनुभएको थियो भनेर कल्पना मात्र गर्न सकिन्छ। कसको सृजना होला यस्तो सौन्दर्य, कसले बनाएको होला र कुन बेला बनाएको होला, को होला त्यो शिल्पकार, यतिविघ्न मादकतालाई एकै पटक भर्दै त्यसमा प्राण फुक्न सक्ने ?

माथि वर्णन भएको सौन्दर्य अन्य कसैमा होइन, यस प्रकारको सौन्दर्यले भरिएको अप्सरा त 'उर्वशी' हो जसको प्रत्येक अंग-प्रत्यंगलाई शिल्पकारले यसप्रकार सजाएको छ कि जसको तुलना अन्य अप्सराहरूसँग पनि गर्न सकिन्न। उर्वशीलाई पूर्णरूपले सौन्दर्यको आधार मानिन्छ।

बिना सौन्दर्य त नारी शरीरको कल्पना पनि गर्न सकिन्न। यस्तो पनि भन्न सकिन्छ कि नारी शरीर बिना त सौन्दर्य खुल्नै सक्दैन। त्यसो त प्रकृति-सौन्दर्य, पुरुष-सौन्दर्य पनि हुन्छन् तर सौन्दर्य जहाँ खुल्दछ त्यो नारी नै हुन्छ।

शास्त्रहरूमा सौन्दर्यलाई जीवनको उल्लास र उत्साह मानिएको छ। यदि जीवनमा सौन्दर्य छैन भने त त्यो जीवन निरस र निष्प्राण हुन्छ। यसको कारण यो हो कि हामीले सौन्दर्यको परिभाषालाई नै बिर्सिसकेका छौँ, हामीले जीवनमा हाँस्न र मुस्कुराउन नै बिर्सिसकेका छौँ, हामी धनको मात्र पछि लागेर एक प्रकारले अर्थलोभी बन्न पुगेका छौँ जसको कारण जीवनका अन्य वृत्तिहरू लुप्त जस्तै भइसकेका छन्। शास्त्रहरूमा यदि हामीले हेर्‍यौं भने हाम्रा पूर्वजहरूले, ती ऋषि र देवताहरूले सौन्दर्यलाई आफ्नो जीवनमा विशिष्ट स्थान दिनुभयो र ती अप्सराहरूको साधना सम्पन्न गर्नुभयो जसद्वारा उहाँहरू सौन्दर्यमयी, तेजस्वी, पूर्ण सम्पन्न बन्न सक्नुभयो, आफ्ना जीवनका ती न्यूनताहरूलाई समाप्त गर्न सक्नुभयो। अप्सराहरूलाई सिद्ध गर्नुको पछाडि हाम्रा पूर्वजहरूको चिन्तन महान् थियो। यसको माध्यमबाट उहाँहरूले जीवनमा ऐश्वर्य, धनधान्यपूर्ण सौन्दर्य आदि प्राप्त गर्नुभयो। यसै सौन्दर्यको माध्यमबाट उहाँहरूले पूर्णता र श्रेष्ठतालाई समाजसामु प्रस्तुत गर्नुभयो।

वशिष्ठ, विश्वामित्र, इन्द्रादिले देवता र ऋषिहरूले सौन्दर्यलाई आफ्नो जीवनमा निवास दिनुभयो, एउटा महत्त्वपूर्ण स्थान दिनुभयो जसबाट साधारण मानिसले पनि उर्वशी, मेनका, रम्भा आदिको सौन्दर्यलाई

साक्षात्कार गर्न पाउनुभयो । ती देवता र ऋषिहरूले हाम्रो जीवनमा साधनात्मक चिन्तनलाई स्पष्ट गरेर हामीलाई पूर्णताको मार्ग देखाउनुभयो जसले जीवनमा रस भरिदिन्छ, सौन्दर्य भरिदिन्छ । यस्तो रस र सौन्दर्य यदि कसैको जीवनमा प्राप्त हुन्छ भने त्यो जीवन सफल, श्रेष्ठ र अद्वितीय कहलिन्छ ।

ती देवताहरूले ती विशिष्ट साधनाहरूलाई सम्पन्न गरेर, त्यसको पूर्णरूपमा वर्णन गरेर समाजलाई त्यस रहस्यमय र अद्भुत सौन्दर्यसँग परिचय गराउनुभयो जुन अज्ञात थियो ।

अप्सरा र सौन्दर्य दुवै एक अर्काका पर्याय हुन् । कुनै पनि अप्सराको बारेमा जान्नका लागि हामीले पहिले उसको अपूर्व सौन्दर्यको बारेमा जान्नु आवश्यक छ ।

उर्वशीको नाम जस्तो छ त्यस्तै यसको रूप, सौन्दर्य पनि छ जुन एउटा झरनाजस्तै निर्बाध गतिले बगिरहेको लाग्दछ । देवता होस् वा मानिस पहिलो पटकमै सुधबुध खोसिदिने सौन्दर्य केवल रूपोज्ज्वला अप्सरामा मात्र छ ।

सोह्र वर्षीय, अण्डाकार अनुहार, तालजस्तै गहिरो आँखा जुन आँखाले हेर्दा यस्तो लाग्दछ कि शान्त तालमा कसैले ढुंगा फ्यालेर कम्पन उत्पन्न गरेको छ, अत्यन्तै सुन्दर नाक, प्रबल लालिमायुक्त निधार जसलाई देखेर कोही पनि होशमा नै रहँदैन, स-साना दाँतका पङ्क्ति, सुन्दर र स्वच्छ कालो घना केश नितम्बमा लहराएर तल झरेको छ । पाउमा स-साना पाउजु सजाएको हुनाले पाउ अत्यन्तै सुन्दर र सजाइएको प्रतीत हुन्छ, यौवनले झुकेको शरीर यस्तो प्रतीत हुन्छ कि मानौं आफ्नो रूप, सौन्दर्य र यौवनले सम्पूर्ण विश्वलाई पराजित गर्न खोजिरहे जस्तो लाग्दछ । जसको सौन्दर्यको अगाडि कामदेव र रति तथा समस्त अप्सराहरू पनि लज्जित हुन्छन् । नारायण ऋषिको उरु भागबाट निस्केको र सबैको हृदयमा बस्ने हुनाले तिनी उर्वसीको नामले विख्यात् हुन पुगिन् । उर्वशी त सम्पूर्ण यौवनलाई जीवनमा उतार्ने स्वामिनी हुन् । सुन्दर, पातलो, छरितो शरीर मानौं फूलहरूबाट निर्मित भएको हो जसलाई देख्दैमा पनि असमय बूढो भएको मनलाई यौवनको स्मरण दिलाउँछ ।

# उर्वशी र रम्भाबीच प्रतिस्पर्धा

देवताहरूका राजा इन्द्रको सभामा चारजना सुन्दरी नर्तकीहरू उर्वशी, रम्भा, मेनका र तिलोत्तमा थिए । एकदिन उर्वशी र रम्भामा को सबैभन्दा राम्रो नर्तकी भन्ने विवाद भयो र इन्द्रलाई निर्णय गर्न अनुरोध गरियो । इन्द्रले दुवैलाई सभामा बोलाए । दुवै जना भव्य शृङ्गार गरेर सभामा नाच्न थाले तर दुवैजनाको नाच ज्यादै राम्रो भएकाले इन्द्रले कुनै निर्णय गर्न सकेनन् । त्यसैबेला सभामा बसेका नारदमुनिले पृथ्वीतलमा रहेको उज्जैन राज्यका राजा यस कुराको निर्णय गर्न सक्तछन् किनकि उनी प्रख्यात् धर्मपरायण, समाजसेवी राजा हुन् भन्ने निश्चय गरे । नारदमुनिले भनेअनुसार इन्द्रले आफ्नो सारथी मतालीलाई राजा विक्रमादित्यलाई लिएर आउनू भनी पृथ्वीमा पठाए । राजा विक्रमादित्यले इन्द्रको निमन्त्रण स्वीकार्नु अघि आफूसँगै उभिएको भत्तीसँग सोधे । भत्तीले निमन्त्रण स्वीकार गर्न सल्लाह दिएपछि राजाले आफ्नो राजपोशाकसहित हतियारहरूले सुसज्जित भएर नजिकैको काली मन्दिरमा गई पूजा गरेर आशीर्वाद लिई हिँडेर इन्द्रको रथमा चढ्न लाग्दा इन्द्रको सारथी मतालीले यस पृथ्वीको मनुष्य मरणशील प्राणीलाई किन देवलोकमा लैजानु भन्ने कुभावना आएको ले उनले राजा चढ्न नसकून् भनेर रथ बेस्सरी दौडाउन खोज्दा राजाले हत्तपत्त एउटा खुट्टाले रथमा बेसरी टेकिदिनुभयो । राजाको पराक्रमले गर्दा रथ अगाडि बढ्न सकेन र सारथीले ठूलो गल्ती भयो भनेर राजासँग माफी माग्यो र राम्रोसँग इन्द्रको सभामा पुऱ्यायो ।

> *'राजा विक्रमादित्यलाई पनि निर्णय गर्न सजिलो भयो र उनले उर्वशीलाई विजयी घोषणा गरे ।'*

इन्द्रले राजालाई सम्मान गरेर आफ्नो सभामा दुई नर्तकीहरूको नाचको निर्णय गर्न अनुरोध गरे । राजा विक्रमादित्य इन्द्रको बगैँचामा गई फूलहरूको दुईवटा गुच्छाहरू बनाएर ती गुच्छाहरूमा केही माहुरी कीराहरू पनि राखे । त्यसपछि सभामा गएर नाच शुरु गर्न आग्रह गरे । दुवै नर्तकी भव्यसँग नाच्न थाले । त्यसको केही क्षणमा राजाले दुवै जनालाई एक-एकवटा फुलको गुच्छा दिएर नाच्न लगाए । हुन पनि त्यसै त धेरै राम्रो नाच त्यसमाथि फूलको गुच्छा लिएर नाच्दा इन्द्रको सभा नै मोहित भयो । नाच्दानाच्दै रम्भाले भन्ठानिन् मेरो नाच साह्रै राम्रो भएको छ, उनी ज्यादै उत्साहित भइन् र घमण्डले उनको हात फूलको गुच्छाभित्र पस्यो र त्यहाँको माहुरीले हातमा टोकिदियो । त्यसपछि उनले तत्कालै फूलको गुच्छा फालिदिइन् र टोकेको दुःखाइले उनको नाच पनि अवरुद्ध भयो । तर उनीसँगै नाचिरहेकी उर्वशी आफ्नो काम (नाच) मा पूर्णतया समर्पित थिइन् । त्यसैले उनी नाचिरहिन्– हल्का हातले फूलको गुच्छा समातेर । राजा विक्रमादित्यलाई पनि निर्णय गर्न सजिलो भयो र उनले उर्वशीलाई विजयी घोषणा गरे । सभाका सबैजना खुशी भए, धेरै खुशी भएर राजालाई इन्द्रले आफ्नो राज्याभिषेकको सुनको श्रीपेचसहित धेरै मूल्यवान् उपहारका साथ पृथ्वीमा दुई हजार वर्षसम्म प्रतापी राजाको रूपमा राज्य गर्न आशीर्वाद पनि दिए । इन्द्रले आफ्नो सारथी मतालीलाई राजा विक्रमादित्यलाई पृथ्वीमा लैजान भने अनुसार राजा पृथ्वी आएर राज्य गरे । स्रोत: 4to40.com

# साधना-अप्सराको

> **कुनै पनि व्यक्तिमा कामभावना त छ तर कामवासना नहोस् । तर कामवासना मात्र होइन कुनै पनि वासना आफैमा प्रवंचना हो ।**

सौन्दर्ययुक्त हुनु, शृंगार गर्नु प्रकृतिको गुण हो । प्रकृति आफ्नो शृंगार गर्नमा हर क्षण व्यस्त जस्तै बनिरहनु भएको छ, नित्य नूतन भइरहनु भएको छ । यसैले हामीलाई सधैं मनोहरपूर्ण प्रतीत हुन्छ ।

शृंगार गर्नुको अर्थ हो आफैलाई जीवनमा जोडेर राख्नु, स्वयंको प्रस्तुति सजीव र स्पन्दितरूपमा गर्दै रहनु, जीवनमा कुनै जडताको प्रवेश त टाढै भयो त्यसको आभाससम्म पनि हुन नदिनु ।

शृंगार गर्नु त आफैलाई सम्मान गर्नु हो र आफैलाई सम्मान गरेपछि मात्र कसैले अरूलाई पनि सम्मान गर्न सक्छ ।

जहाँ जीवनको सम्मान हुन्छ त्यहाँ यो सम्भव नै छैन कि कसैले शृंगारबाट आफूलाई पृथक् राख्न सकोस् किनकि शृंगारको माध्यमबाट सौन्दर्यको प्रस्फुटन र विकास हुन्छ र सौन्दर्य नै यस जगत्को गतिशीलताको आधार हो ।

यो कुरा जति भौतिकरूपमा सत्य छ त्यति नै सत्य छ– आध्यात्मिक र साधनात्मकरूपमा पनि ।

भौतिकरूपमा सौन्दर्यको जुन स्थान छ, जुन त्यसको स्पर्शबाट प्राप्त हुने माधुर्यको तरंग छ त्यो त वर्णनभन्दा पनि अनुभूतिको विषय हो । आध्यात्मिकरूपमा यही कुरा नाद र बिन्दु मिलनको रूपमा वर्णित छ ।

नाद प्रतीक हो शिवत्वको एवं बिन्दु प्रतीक हो शक्तिको । यस सम्पूर्ण चराचर सृष्टिको रचना नै नाद र बिन्दुको मिलनबाट सम्भव भएको हो र नित्य भइरहेको छ तथा जसको उत्प्रेरक (Catalyst) को उपस्थितिमा सम्भव भइरहेको छ त्यो हो– सौन्दर्य ।

सौन्दर्यबाट कामको सृजन हुन्छ र यसै कारण हाम्रो संस्कृतिमा कामको स्थान तुच्छ वा हेय नभएर एउटा पुरुषार्थको रूपमा स्वीकार गरिएको पाइन्छ ।

हाम्रो संस्कृतिमा कामको अर्थ दैहिक भावनासम्म मात्र सीमित छैन बरू उदात्तरूपमा साधना पनि हो– नाद र बिन्दुको समवेत रूपको ।

काम तत्त्वको उपेक्षा कुनै पनि मानिसबाट सम्भव छैन । यहाँसम्म कि कुनै संन्यासीबाट पनि सम्भव छैन किनकि प्रत्येकको जीवको उत्पत्तिको माध्यम काम हो ।

जुन काम भावनाको स्फुरणबाट जीवको गर्भमा अंकन हुन्छ त्यो बीजारोपण कालदेखि नै त्यस जीवको सूक्ष्म स्मृतिमा कहीं न कहीं अंकित हुन जान्छ र त्यही ऊभित्र एउटा सघन भाव वा Basic instinct बनेर सदैव साथसाथै रहन्छ ।

कुनै पनि व्यक्तिमा कामभावना त छ तर कामवासना नहोस् । तर कामवासना मात्र होइन कुनै पनि वासना आफैमा प्रवंचना हो । यसका लागि के उपाय सम्भव हुन सक्छ ?

यसको एक मात्र उत्तर सौन्दर्यको साधना वा स्वयंमा सौन्दर्यबोध विकसित गर्नु हो । सौन्दर्यबोधको भावनाको विकास भएपछि मात्र कसैले त्यस परमतत्त्वको सौन्दर्यलाई बुझ्न सक्छ ।

सौन्दर्य शब्दले भन्दछ कि कुनै पनि मानिसमा जुन विम्ब सर्वप्रथम आउँछ त्यो कुनै स्त्रीको हुन्छ । सौन्दर्य र स्त्री मानौं एक अर्काको पर्यायवाची शब्द हो र यो असहज पनि छैन किनकि यस सृष्टिमा सौन्दर्यको सर्वाधिक स्पन्दनशील रूप एउटी स्त्री नै हुन सक्छिन्, दैहिक रूपमा मात्र नभई कोमल भावनाहरूको अभिव्यक्तिकरणको रूपमा पनि ।

भावनाको सौन्दर्यबाट जे उत्पन्न हुन्छ त्यसैलाई लास्य अर्थात् नर्तन भनिन्छ र यस्तो नर्तनमा हातखुट्टाको गतिशीलता हुनु आवश्यक छैन । एउटी नर्तनको स्थिति यस्तो पनि हुन्छ कि जहाँ मन नृत्य गर्दछ । यस्तो तब हुन्छ जब मनमा सौन्दर्य बोधको कुनै धारणा निर्मित भएको छ ।

एउटा बालक जब पढ्न जान्छ तब उसलाई 'क बाट कमल' पढाइन्छ । यद्यपि 'क बाट कंचन' पनि हुन्छ तर बालकले कंचनको भाव ग्रहण गर्न सक्दैन । सौन्दर्यलाई पनि व्याख्या गर्ने समयमा (प्राथमिक चरणमा) यसको प्रचलित मान्यताको रूपमा प्रस्तुत गर्नु बाध्यता भएको छ तर यसको तात्पर्य यो होइन कि सौन्दर्य शब्दको भावलाई नै सीमित

गर्नुपर्दछ ।

मानिसमा कामभावनामा कुनै विकृति नआओस् भनेर नै विवाह संस्कारको जन्म भएको हो । स्त्री र पुरुषलाई परस्पर संयुक्त गर्ने धारणा बन्यो अन्यथा आदिम युगमा त विवाह जस्तो कुनै धारणा पनि थिएन ।

एउटी स्त्री र एक पुरुषको मिलनबाट जुन इकाई बन्दछ त्यो पनि एक नै हुन्छ, हाम्रो संस्कृतिले हामीलाई यही बताउँछ ।

ऋग्वेदमा एउटी नवविवाहितालाई आशीर्वचन दिने समयमा भनिएको पाइन्छ कि दशपुत्रवती भव, एकादश पुत्र तिम्रो पति होस् ! यस कथनको यही अर्थ हुन्छ कि दस वर्षपछि पति र पत्नी परस्पर वासनाको भावबाट पृथक हुन् तथा स्त्री मातृत्वको भावबाट यति धेरै आपूरित हुन जाओस् कि उसलाई आफ्नो पति पनि शिशुसदृश लाग्न लागोस् ।

व्यक्तिमा भावनाको उदात्तीकरण जुन माध्यमबाट हुन सक्छ त्यो सौन्दर्यबोध नै हो । कुनै मानिस बगैँचामा जान्छ र फूलेका फूलको मुस्कानलाई नियालेर मनमनै मुस्कुराएर अगाडि बढ्छ भने कसैले त्यही फूललाई चुँडेर आफ्नो कोटमा राख्न चाहन्छ । कसैले भने फूललाई सुँघेर क्षतविक्षत गरेर फ्याल्न खोज्छन् ।

यसमा प्रथम व्यक्ति सौन्दर्यबोधबाट युक्त व्यक्ति हो भने दोस्रोलाई भोगी तथा तेस्रोलाई बलात्कारीको मानसिकताबाट युक्त व्यक्ति मान्न सकिन्छ ।

साधक स्वयंले नै निर्णय गरोस् कि ऊ कुन मानसिकतामा छ । आखिर भावनाको पनि केही महत्त्व छ । यदि जीवनमा यसको महत्त्व छैन भने पनि साधना मार्गमा त अवश्यै छ ।

जीवनको उत्स काल अर्थात् जुन कालमा मानिस आफ्नो जीवनको निर्माण सततरूपले गर्दै रहन्छ, त्यो २१ देखि ५० वर्षको बीचमा हुन्छ । ५० वर्षपछि कुनै नवीन भावलाई स्वीकार गर्ने चेतना अथवा कुनै नयाँ कार्यलाई हातमा लिने क्षमता (entrepreneurship) कम हुन लाग्दछ ।

जीवनको यो मध्यकाल केवल शारीरिक र मानसिक क्षमताको दृष्टिबाट मात्र हो इन बरू ५० वर्षपछिको जीवनलाई पनि क्षमतावान् बनाएर राख्ने दृष्टिबाट पनि महत्त्वपूर्ण काल हुन्छ ।

जीवनको यसै क्षणमा जुन साधनालाई सम्पन्न गर्नुपर्छ त्यो साधना हो अप्सरा साधना किनकि अप्सरा साधनाबाट शरीरलाई ऊर्जा र शारीरिक ऊर्जाभन्दा बढी आवश्यक मानसिक उल्लास प्राप्त हुन्छ, त्यो आगामी जीवनका लागि अने करूपमा लाभप्रद सिद्ध हुन्छ ।

यो एउटा अनुभूत तथ्य हो कि यदि अप्सरा साधनालाई सम्पन्न गरेपछि अन्य साधनालाई प्रारम्भ गर्नाले त्यसमा अपे क्षाकृत अधिक तीव्रतासँग सफलता प्राप्त हुने स्थिति बन्न जान्छ किनकि अप्सरा साधना गरेपछि निश्चय नै साधकको शरीरमा यस्तो परिवर्तन हुन जान्छ जुन आन्तरिकरूपमा उसलाई नित्य यौवनवान् बनाएर राख्नमा सहायक सिद्ध हुन्छ । जय गुरुदेव !

(साभार : मन्त्र तन्त्र यन्त्र विज्ञान, मे २०००)

## सूक्ष्म शरीरको यात्रा

# अप्सरा लोक

**आत्मीय पाठकवृन्द, धेरै पाठकहरूको विशेष अनुरोधमा हामीले 'डायरी' स्तम्भलाई पुनः प्रकाशित गरेका छौं। कोरा सैद्धान्तिक व्याख्याभन्दा प्रयोगात्मकरूपमा एकजना साधकले भोगेका अनुभवहरूलाई यहाँ जस्ताको तस्तै उतारिएको छ। यसको मौलिकतालाई कायम राख्दै साधकको व्यक्तिगत पृष्ठभूमि एवं परिचयलाई भन्दा रोचक एवं आवश्यक प्रसङ्गहरूलाई मात्र यसमा समावेश गरिएको छ। यसका बाँकी अंशहरूलाई धारावाहिकरूपमा क्रमशः प्रस्तुत गर्दै लगिनेछ।**

...अवस्थामा आएँ। यहाँ निरूपणको अर्थ र परिभाषा अलि विराट् रूपमा लिइएको छ। जे होस् एउटा अर्थचाहिँ सूक्ष्मबाट अति सूक्ष्म निर्माण भई पुन: सूक्ष्ममा पूर्णरूपले फर्किसकेको अवस्थालाई बुझाउन खोजिएको छ। हामी (देवी र म) त्यहाँबाट अर्कै ठाउँमा प्रस्थान गऱ्यौं। मलाई अब हामी कहाँ जाँदैछौं भन्ने कुरा स्वत: थाहा भयो। देवसंस्कार प्रदान गरिसकेपछि मकहाँ ल्याउनू भनेर इष्टदेवी (माता) ले भन्नुभएको कुरा याद भयो। यस्तै प्रक्रियामा कैयौं सूक्ष्म शरीर हुँदा रहेछन्। कुनै सूक्ष्म शरीर देवसंस्कारमा जाँदा रहेछन्। कुनै सूक्ष्म शरीर अन्य-अन्य प्रकारका संस्कारमा जाँदा रहेछन्। मानव देहमा रहँदा मानव संस्कारमा बस्दोरहेछ। तर दु:खको कुरो के रहेछ भने मानव संस्कारमा आएपछि फर्केर जाने ठाउँ नै भुल्दोरहेछ। आफ्नो इष्टदेव वा इष्टदेवीलाई नै भुल्दोरहेछ र मानव देहमा सूक्ष्मशरीर भट्किरहँदो रहेछ। सद्गुरुसँग मुश्किलले भेट्न पाउनु अहोभाग्य हुँदोरहेछ। मनुष्यलोक नै मायारूप भएकोले जता हेऱ्यो त्यतै भ्रम देखिने भएको हुनाले ठम्याउन नै गाह्रो हुँदोरहेछ। के सत्य, के असत्य छुट्याउन नै गाह्रो पर्दोरहेछ। सद्गुरुदेवको सङ्गतमा पुग्नासाथ उक्त भ्रमरूपी जालो फाट्दोरहेछ। जसरी दूधलाई अमिलोले फटाइदिन्छ त्यसैगरी सद्गुरुदेवको सम्पर्कमा पुग्नासाथ सांसारिक जालो हट्दोरहेछ र सूक्ष्मशरीरले आफूलाई ऊर्ध्वमुखी बनाउन सफल हुँदोरहेछ।

जीव-जगत्को स्पष्ट भेद छुट्याउनको लागि आत्मा स्वयं समर्थ हुनुपर्ने रहेछ। जीवले भोग गर्ने थलो जगत् रहेछ। सूक्ष्म शरीरको लागि मानव देह अर्थात् स्थूलशरीर जगत् हुँदोरहेछ। अति सूक्ष्म शरीरको लागि सूक्ष्म शरीर जगत् हुँदोरहेछ। यसरी टुक्रा पार्दै जाँदा, विश्लेषण गर्दै जाँदा एउटै जीव कुनै अवस्थामा जगत् बन्दोरहेछ, कुनै अवस्थामा जीव बन्दोरहेछ। आत्मा र परमात्माको पनि यहाँ आएर किटानसाथ भन्न नसकिने, बुझ्न नसकिने अवस्था सृजना भयो मलाई। आत्मा र परमात्मा दुई पक्षमा कुनचाहिँ जीव हो, कुनचाहिँ जगत् हो। भ्रमरूप आउनु जगत् रहेछ। वास्तविक ज्ञान जीव र जगत्भन्दा माथि उठेपछि मात्र प्राप्त हुने रहेछ। जीव र जगत्लाई मन्थन गर्दा जे निस्कन्छ त्यो चाहिँ परमात्मासँग निकट हुनसक्छ। यहाँ यस कुरालाई किन कोट्याउन खोजिएको भन्दा ममा जे भइरहेछ, महसुस भइरहेछ, त्यसलाई जस्ताको तस्तै राखिदिँदा सत्य रूप आउँछ कि भनेर हो। जीव र जगत् परमात्माको संकल्परूप भएता पनि आत्मालाई परमात्माको अंश मानिन्छ। यी विषयवस्तुलाई यही नै छोडौं।

देवी (माँ) र म इष्टदेवी (माता) कहाँ पुग्यौं। मातालाई मैले साष्टाङ्ग दण्डवत् गरेँ। उहाँले आशीर्वाद दिनुभयो। म अखण्ड शक्ति प्रज्ञा प्राप्त भइरहेको थाहा पाएर लम्पसार परिराखेँ। माता (मलाई सहयोग गर्ने देवी) ले मलाई उठाउनुभयो। त्यतिबेलाको क्षणको बारेमा म व्याख्या गर्न नै सक्दिन। त्यसप्रकारको क्षणको तुलनामा मानव देह त ज्यादै तुच्छ लाग्यो। तर पनि मानव देहको आफ्नै महत्त्व भने अवश्य छ। त्यही मानव देहको सहाराले

म यहाँसम्म आउन सम्भव भएको छ । त्यस रूपबाट भन्नुपर्दा मनुष्य जीवनलाई धन्य नै मान्नुपर्दछ । इष्टदेवी (माता) ले आदेश दिनुभयो कि 'तिमी अब दैवी प्रज्ञा धारण गर्दै आफूलाई रूपान्तर गर्दै जुन रूपमा पनि प्रकट हुन सक्ने बन्नू ।' त्यो धारणाशक्तिको विकास हुनुभन्दा पहिले एउटा गुरु परीक्षा पार गर्नुपर्ने रहेछ मलाई । तर यस बारेमा माताले वृहद्रूपमा केही पनि बताउनु भएन ।

त्यहाँको वातावरण क्षणभरिमा शून्यसमान भयो । कोही थिएनन् । मलाई कस्तो-कस्तो लाग्न थाल्यो । आफू एक्लो भएको जस्तो हुन थाल्यो । आत्मामा बेचैनी र छटपटी भएको जस्तो हुन थाल्यो । कताकता उकुसमुकुस हुन थालेको जस्तो भान भयो मलाई । मेरो आफ्नो स्वरूप नै बिर्सन लागेजस्तो हुन थाल्यो । एकैक्षणमा मेरा धेरै रूप देखा परे जस्तो, कहिले एउटा रूप मात्र देखा परेको जस्तो हुन थाल्यो । म अमिरण प्रक्रियामा जाँदा केही मद्दत होला भन्ने ठानी सो प्रक्रियामा लिप्त भएँ । जब म अमिरण प्रक्रियामा गएँ, मेरो सूक्ष्मशरीर नै विलीन हुन खोजे जस्तो, कस्तो-कस्तो अवस्था सृजना भयो । म केही थाहा नपाउने अवस्थामा पुगेछु । ब्यूँझदा म अर्कै स्थानमा रहेछु । एउटा घरजस्तो भित्र पलङमा रहेछु । मलाई सुताइएको अवस्थामा मैले पाएँ । म अमिरण प्रक्रियामा गएको थाहा छ र अहिलेको अवस्था थाहा छ तर त्यस बीचमा के भयो, म कसरी यहाँ आइपुगेँ आदि बारेमा मलाई केही जानकारी भएन । म उठेँ र पलङमा नै बसी वरिपरि दृश्यावलोकनमा मग्न हुन थालेँ । म बसेको ठाउँका दृश्यहरू नै यति मनमोहक (आत्ममोहक) थिए कि जहाँ रहँदा बस्दा सम्पूर्ण कुरा नै पाए जस्तो प्रतीत हुन्थ्यो । यहाँ मनलाई हरण गर्ने मनमोहक भएता पनि सूक्ष्मशरीर (आत्मा) लाई नै हरण गर्न सक्ने भएर आत्ममोहकको संज्ञा दिइएको हो । म यति चुर्लुम्म डुबेँ कि मेरो वास्तविक स्वरूप नै बिर्से जस्तो लाग्यो । आसक्तिरूप सकिएपछि अनासक्ति रूपको जन्म हुन्छ र दुःखरूप सकिएपछि सुखरूप प्राप्ति हुन्छ भनिए जस्तै भयो मलाई । हुन त ममा एउटा घमण्ड भनौँ वा अहंकार छिपेर रहिरहेको रहेछ जसको कारण आज यस क्षणमा मलाई यी दृश्यहरूले एक-एक गर्दै आकर्षित गरिरहेका छन्, तानिरहेका छन् । आसक्तिरूपले घर (भोग) गरुन्जेल जति चेष्टा गर्दा पनि पञ्जाबाट छुटकारा मिल्दो रहेनछ । अब त मेरो लागि एउटै विकल्प थियो कि छिटोभन्दा छिटो यस चरणमा के-के आसक्ति छन्, भोग गरेर समाप्त पार्ने किनकि आसक्तिरूपको अन्त्यपछि मात्र अनासक्तिरूपको जन्म हुन्छ ।

मलाई कोठाबाट बहिर जान इच्छा जाग्यो । जब म बाहिर निस्कँ, बडो अचम्मको रमाइलो संसार देखापऱ्यो । विभिन्न थरिका बगैँचाहरू थिए । फूलबारी साह्रै सजिएका थिए । प्रत्येक ठाउँ उत्तिकै रूपमा ताजा देखिन्थ्यो । उत्साह, उमङ्ग, जोश र जाँगर सम्पूर्ण नै त्यस ठाउँमा पाइयो । ममा पूर्णरूपमा जोश, उत्साह आदिले घर गरिसकेको भान भयो । कता-कता यस्तो रमणीय स्थानमा कोही देखा परे हुन्थ्यो भन्ने इच्छा जागृत हुन पुग्यो । नौलो ठाउँमा कुनै रमाइलो ठाउँ देख्दा हेरेर आनन्द लिएजस्तै मैले यताउता हेर्दै हिँड्न थालेँ । कुनै ठाउँमा छहरा देखापऱ्यो । त्यो देख्ना साथै कोही नुहाइरहेको छ कि भन्ने भाव आयो तर कोही देखिएनन् । त्यसैगरी म टहलिँदै हेर्दै गएँ, एउटा तलाउजस्तो देखा पऱ्यो तर उक्त तलाउ अलि टाढा पर्दथ्यो । मलाई किन-किन त्यहाँ जान मन लाग्यो । त्यहाँ जाँदाजादै दुईतिर जाने एउटा बाटो देखापऱ्यो । म तलाउतिरको बाटो छाडी अर्को बाटो लागेँ । केही पर मात्र के पुगेको थिएँ करीब पाँच छ जना जस्ता केटी मान्छेहरू हाँसेको जस्तो स्वरहरू सुन्नमा आए । म हाँसो आएको आवाजलाई पछ्याउँदै गएँ । जति नजिक हुन खोज्यो, उति टाढा भएजस्तो भयो । मलाई झन बढी कौतुहल जागेर आयो को-को रहेछन् भनेर टाढाबाट भए पनि चिहाएर हेर्न मन लाग्यो । तिनीहरू को हुन् ? कस्ता खालका होलान् ? आदि आसक्तिरूपी भावले मलाई ग्रस्त बनायो । जति म आसक्ति भाव वृद्धि गर्थें ती हाँसो हरू उति नै नजिक भएजस्तो लाग्न थाल्यो । म उक्त ठाउँ खोज्न थालेँ । खोज्दा-खोज्दा म यति धेरै थाकेछु कि कति समयसम्म म हिँडे भन्ने कुरा नै यकिनका साथ भन्न गाह्रो भयो । सम्पूर्ण चिन्तन-मनन नै आसक्ति भावमा बद्लियो । हेर्नको लागि आँखाहरू यति आतुर थिए कि जसको व्याख्या म गर्न सक्दिन । त्यहाँको वातावरण अत्यन्त रमणीय थियो । मनमोहक थियो । तर पनि ती सम्पूर्ण विषयवस्तुहरूले मेरो खुशी तान्न सफल भएनन् । मलाई कताकता त्यो वातावरण अपूर्ण भएजस्तो लाग्यो । तर पनि बेलाबेलामा मलाई कसैले नियालिरहेको आभास चाहिँ भइरहेको थियो ।

एउटा चउरजस्तो ठाउँमा सूक्ष्म अनुमति लिएर आराम गर्न मन लाग्यो । चित्तवृत्तिमा अनेक चित्रहरू कोरिइरहेका थिए । म पूर्णरूपबाट योगनिद्राजस्तो रूपमा गएँ । म सपनारूपी संसारमा प्रवेश गरेको जस्तो लाग्यो । विभिन्न प्रकारका रूप, रङ्गहरूले मेरो सम्पूर्ण भागमा घर गरिसकेका थिए । कति समय आराम गरेँ त्यो थाहा भएन । के-के देखेँ भनेरै साध्य छैन । यहाँ भन्न खोजिएको विषयवस्तु जसरी स्थूल शरीर सुत्दा सपना देखिन्छ त्यसैगरी

सूक्ष्म देहले पनि केही देख्दोरहेछ । सो ही चित्रअनुरूपको पात्र-पात्रा निर्माण गर्दोरहेछ र भोग गर्दोरहेछ । यसप्रकारको उपक्रमलाई चित्तभोग भनिँदोरहेछ । प्रत्येक विषयवस्तुले सबैभन्दा पहिलो चित्तमा प्रवेश गर्दोरहेछ । चित्तमा नै भोगी हुँदोरहेछ । भोग र योगको परिणाम उस्तै-उस्तै लागे पनि अलि फरक फरक रहेछ ।

कुनै दुई पक्षको मिलन विन्दुलाई योग भनिन्छ । त्यसैगरी कुनै दुई पक्षको कुनै न कुनै उद्देश्य अथवा प्रयोजनबाट मिलन हुन्छ भने त्यसलाई भोग भनिन्छ ।

राम्रा-राम्रा विषयवस्तु बीच पनि योग हुन्छ । त्यसैगरी नराम्रा विषयवस्तुबीच पनि योग हुन्छ । एवम् प्रकारले भोगमा पनि त्यही नियम लागू हुन्छ । कुनै समयमा योगपश्चात् भोगको जन्म हुँदोरहेछ । कुनै समयमा भोगपश्चात् योगको जन्म हुँदोरहेछ । हामीमा योग भन्नासाथ राम्रो भावले हेर्ने र भोग भन्नासाथ नराम्रो भावले हेर्ने बानी परिसक्यो । वास्तवमा हामी गलत वृत्तिका रहेछौँ । भोग भए पनि योग भए पनि त्यसपछिको परिणाम कस्तो हुन्छ सोहीअनुसार नै अगाडि बढ्ने मानसिकता बनाउनु नै उत्तम उपाय रहेछ । प्रत्येक अवस्थाभित्रबाट ज्ञान प्राप्त गर्नु नै राम्रो हुने रहेछ । दिनपछि रात अनि रातपछि दिन भने जस्तो नै रहेछ भोग र योग । तर परिभाषित गर्दा दिनले सदैव उज्यालोको र रातले अँध्यारोका प्रतिनिधित्व गरेता पनि भोग र योगको परिभाषालाई ठ्याक्कै तोकेर भन्न नसकिने अवस्था रहेछ ।

यस्ता विषय एकछिन यहीँ नै छोडौँ । जब म लामो योगनिद्राबाट ब्यूझेँ, धेरै नै शक्ति भरिएको महसुस गरेँ । उत्साह, उमङ्ग भरिएको महसुस गरेँ । आनन्द र शान्तिको अनुभव गरेँ । मलाई अविचलित अवस्था प्राप्त भएको अनुभव भयो । जब आनन्द र शान्ति प्राप्त हुन्छ स्वत: नै दैवीप्रज्ञाको विकास र विस्तार हुँदोरहेछ । म यही अवस्थालाई लम्ब्याउनपट्टि लागेँ । यस्तै क्रममा समय बितिरहेको थियो । मधुर ध्वनि गुञ्जन थाल्यो । ध्वनिको तरङ्ग नै मेरो मन मस्तिष्कमा गुञ्जन थाल्यो । ध्वनिको तरङ्गले अत्यन्त आनन्द महसुस हुन थाल्यो । म पुन: त्यहाँबाट उठेर यताउता गर्दै टहलिन थालेँ । म नजानिदो रूपबाट कुनै शक्तिको वशमा पर्दै गइरहेको प्रतीत हुन्थ्यो तर पनि म पूर्णरूपले संयमित भइरहेको थिएँ ।

जाँदा-जाँदा म यस्तो ठाउँमा पुगे कि जहाँबाट सजिलै सबै कुरा नियालेर हेर्न सकिने थियो । तलपट्टि तलाउजस्तो मझौलाखालको पानीको पोखरी थियो । पानी अत्यन्त सफा थियो । अलि माथिपट्टिबाट छहराजस्तो झरिरहेको थियो । म एकटकले हेरिरहेको थिएँ । कतिबेला आँखा झिम्कन पुगेछ । त्यतिन्जेलसम्ममा त्यहाँको वातावारण नै बदलिसकेको थियो । छहरामा ४-५ जना भर्खरका केटीहरू देखा परे । तिनीहरू देख्दामा नै यति धेरै आकर्षक थिए कि जसको वर्णन यहाँ नगरूँभन्दा पनि गर्न मन लागिरहेको छ । लगभग ५ फिट ९ इन्च वा १० इन्चजस्तै अग्ला थिए । सर्लक्क परेको शरीर थियो । ठूलाठूला बाटुला प्रकारका आँखा थिए । गाला पुष्ट प्रकारको, रातो रङ्गमा अत्यन्त कामुक अवस्थाजस्तो प्रतीत हुन्थ्यो । आँखाको हेराइ अत्यन्त सम्मोहनयुक्त थियो । घाँटी (गला) अलिकति लामो थियो । तर ज्यादा लामो होइन । छाती अत्यन्त पुष्ट थियो जसको सौन्दर्यको बारेमा व्यक्त गर्न म असमर्थ छु । कम्मर काटिएको जस्तो थियो । त्यसको तुलनामा दुवै नितम्ब फुकेका थिए । हातका औँलाहरू सर्लक्क परेका लामा तर मोटा होइनन्, ज्यादै झिना पनि होइनन्, मझौला खालका थिए । ज्यादै नरम खालका मांसपेशी देखिन्थे । अत्यन्त सुडौल पाराको पिँडौला थियो । पहिरनको सम्बन्धमा शायद यहाँको यस्तै नै चलन हो कि के हो, मैले राम्ररी बुझ्न सकिन । अलिकति यौवन पक्ष झल्काउने खालको नै वस्त्राभूषण थियो । यहाँको वातावरण नै यस्तो थियो कि सम्पूर्ण विषयवस्तु नै सौन्दर्य चुम्नको लागि आतुर थिए ।

म नजानिँदो रूपबाट अप्सरा लोकमा आइपुगेको रहेछु । मलाई त्यहाँको दृश्यमा रम्न मन लाग्यो । त्यहाँ सबैजनाले नुहाउन थाले । नुहाउँदा अर्धवस्त्ररूपमा थिए । तर तिनीहरूको आफ्नै किसिमको आचरण थियो जुन आचरण तिनीहरूको गहनारूप नै थियो । तिनीहरूमा भएको अर्को रूप मात्रा अनुसारको लज्जा पक्ष थियो । जति हेऱ्यो मलाई त्यति हेर्न मन लाग्यो । नअघाउन्जेल हेरिरहेँ, हेरिरहेँ । मभित्र कताकता आसक्ति पक्षले घर गरिसकेको थियो । म सोचिरहेको थिएँ कि यस पक्षलाई कसरी सदुपयोग गर्दै ऊर्ध्वमुखी बन्न सकिन्छ भनेर । अन्य केटीहरू कहाँ पुगे थाहा भएन । एकजना चाहिँ म भएतर्फ नै आइन् र आराम गर्ने एउटा स्थानमा आई आराम गर्न थालिन् । त्यहाँको वातावरण शान्त थियो, आनन्दमय थियो, एकान्त थियो । मलाई स्वत: नै त्यहाँ जाऊँ जाऊँ लाग्यो । तर पनि अत्यन्त संयमित भएर बसेँ । कुरा खेल्न थाल्यो- एक्ली केटी भएको ठाउँमा कसरी जाने ? सोधिन् भने के भन्ने ? आदि-आदि प्रश्नले घर गर्न थाल्यो । म त्यहाँ जान पनि डराइरहेको थिएँ । नजाऊँ भने पनि म भित्र बेचैनी, छट्पटी आदि भइरहेको थियो । यस्तै-यस्तै आन्तरिक द्वन्द्वमा म अड्किरहेको थिएँ । अन्तमा मैले तिनीसमक्ष पुगेर प्रस्तुत हुने इच्छा नै दृढ पारेँ । संकोच र डरका बाबजुद पनि म बिस्तारै उनीसमक्ष प्रस्तुत भएँ र नजिक गएर उभिरहेँ । ममा खुल्दुली थियो कि

उनी को हुन्, उनको नाम के हो भन्ने । यसको कारण मैले उनलाई अभिवादन गर्न नै भुलिरहेको थिएँ । साथै अप्ठ्यारो पनि भइरहेको थियो कि के भनेर अभिवादन गरौं ? मेरो दुविधा महसुस गरेर होला सायद, उनीले नै पहिला अभिवादन गरिन् र बस्नको लागि आग्रह गरिन् । उनले साङ्केतिकरूपमा हातले इशारा गर्ने बित्तिकै निकै साजसज्जासहितको बस्ने ठाउँ तयार भयो । साथै सुसारेहरू पनि तयार भए अर्थात् प्रकट भए ।

वरिपरिको वातावरण पनि निकै मनमोहक थियो । साथै त्यहाँ बैठक हुन लागेको जस्तो पनि लाग्दथ्यो । सायद यही होला स्वर्गको सबैभन्दा सुन्दर महल र सबैभन्दा सुन्दर बैठक । सायद म यसको सजावटको शब्दले वर्णन गर्न असमर्थ छु । मलाई लाग्यो उनी त्यहाँकी सबैभन्दा विशिष्ट व्यक्तित्व थिइन् । मलाई स्वागत गर्ने उनको शैली अनौठो लाग्यो, शायद अप्ठ्यारो पनि किनकि मलाई त्यहाँको वातावरणमा घुलमिल हुन असजिलो भइरहेको थियो । म निकै अदवसाथ बसिरहेको थिएँ । म नजिकको विशिष्ट आसनमा उनी थिइन् भने मचाहिँ अतिथिस्वरूपमा । तत्पश्चात् चिनापर्ची शुरु भयो । तर उनको नाम उल्लेख नगर्ने (नभन्ने) शर्तमा । उनी मसमक्ष खुलेर कुरा गरिरहेकी थिइन् भने मचाहिँ संकोची भइरहेको थिएँ । तैपनि हामीबीच निकै कुराकानी भयो ।

त्यहाँको विशिष्टताको बारेमा, सुन्दरताको बारेमा र अलौकिकताको बारेमा मलाई धेरै कुरा अवगत गराइन् । कुराकानीकै क्रममा उनले बताइन् कि उनीहरू पनि त्यहाँ तपस्या गर्छन् जसको आधारमा उनीहरू इच्छा बमोजिम कुनै नयाँ वस्तु सृजना गर्न सक्छन् । मसँगको उनको प्रथम भेटपश्चात् त्यहाँ एक महल तयार गरेकी थिइन् । उनीहरूसँग त्यस्ता सिद्धिहरू हजारौं पनि हुन सक्छन् जुन तपस्याको आधारमा केन्द्रित हुन्छ । उनीहरूको तपस्या युगौं-युगसम्म सुन्दरता कायम गरिराख्न, वर्चश्व कायम गरिराख्न, भगवान्को कृपादृष्टि सधैं पाइरहनको लागि लक्षित हुँदोरहेछ । जुन क्षणिक नहोस् कल्प, कल्पान्तरसम्म रहिरहोस् । सो क्रममा उनले यो पनि बताइन् कि तपस्या मानवको लागि मात्र होइन देव तथा अप्सरा योनिमा समेत नितान्त आवश्यक छ । शरीरको लागि खाना आवश्यक भएजस्तै आत्माको लागि तपस्या आवश्यक हुँदोरहेछ । कुन आत्माले कस्तो तपस्या गरेको छ सोही आधारमा काम तथा श्रेणी विभाजन हुँदोरहेछ, त्यहाँ पनि । उनकै आधारमा भनौं या त्यहाँको वातावरणले गर्दा मलाई महसुस भयो कि आत्माको लागि भनौं वा मानव जीवन चरितार्थ पार्न तपस्या मूलभूत कुरा रहेछ । तत्पश्चात् उनले कुराकानीलाई मोडेर त्यहाँको सबैभन्दा स्वर्गीय आनन्द मानिने नृत्य हेर्न आग्रहका अनुरोध गरिन्, बाँकी अन्य कुरा पछि गर्ने शर्तमा अघिजस्तै तर अलि बेग्लै किसिमले एक साङ्केतिक इशारा गरिन् । तुरुन्तै त्यहाँको वातावरण सङ्गीतमय वातावरणमा गुन्जित हुन थाल्यो । विभिन्न वस्त्राभूषणमा परीहरू देखिए । एकातर्फ सङ्गीतकर्मीहरू थिए जो एकदमै नौलो परिधानमा थिए । उनीहरू पनि देख्नमा अति आकर्षक देखिन्थे तर उनीहरूमा सङ्गीतप्रति छुट्टै मोह, समर्पण आभास हुन्थ्यो । अभिवादनपश्चात् नृत्य र सङ्गीतको सरगममा त्यहाँको वातावरण रङ्गीन हुन थाल्यो जसको वर्णन सायदै गर्न सकिएला । मलाई लाग्यो- सङ्गीत र नृत्यको सङ्गम फेरि यसरी विरलै होला । सङ्गीतको सुर अति कर्णप्रिय थियो, नृत्यको त अझ कुरै छोडौं । उनीहरूको शरीरको लचकता, ताल जसको म शब्दमा वर्णन नै गर्न सक्दिन । तर ममा अझ एउटा कमजोरी रहेछ नै, त्यो हो कामवासना । त्यहाँका परीहरूको सौन्दर्य र शरीरको बनोट अनि नृत्यको अवस्थाले गर्दा कैयौंपटक मलाई आफ्नो कामवासना नियन्त्रण गर्न धेरै योगशक्ति खर्च गर्नुपऱ्यो । सायद कामवासनासम्बन्धी गुरु परीक्षा लिने ठाउँ यही होला । नृत्य र

सङ्गीतको मिलन कस्तो हुँदोरहेछ मैले यहाँ आएर बुझ्ने मौका पाएँ । सायद संगीत यस्तो पक्ष रहेछ जसले जीवनको सम्पूर्ण आनन्दको बोध हुँदोरहेछ । सङ्गीतले यहाँको वातावरणमा यति मादकता ल्याइदियो कि यहाँको वातावरण सम्पूर्ण नै यही परीहरूसँग तालमा ताल मिलाई नृत्य गरिरहेका छन् ।

सम्पूर्ण वातावरण, जीव, निर्जीव सबै परीहरूको नृत्यको उन्मादमा आफूलाई समर्पित गरिरहेका छन् । मैले आफूलाई नृत्यमा यति चुर्लुम्म डुबेको पाएँ कि मैले आफूलाई समेत बिर्सेको रहेछु । म कहाँ र कोसँग छु भन्ने नै भुलेछु । उनले यस बीचमा सोधेको, कुरा गरेको समेत मलाई आभास भएन । मैले पहिलोपटक सङ्गीतको उच्चतालाई अनुभूति गर्ने मौका पाएँ । यसबाट पनि स्वर्गीय आनन्द प्राप्त गर्न सकिँदो रहेछ । त्यसैले त देव, दानव, मानव एकपटक यस्ता नृत्य हेर्न आफ्ना जीवनभरिको तपस्या खर्च गर्दा रहेछन् । एकपटक यहाँको सङ्गीतमय वातावरणमा चुर्लुम्म हुन जे पनि गर्न पछि पर्दा रहेनछन् ।

मलाई पनि एकपटक यस्तो बेचैनी भयो कि यही नै सबैभन्दा ठूलो आनन्द हो र जीवनको उद्देश्य पनि । यस्तो स्वर्गीय आनन्दलाई बिर्सेर (छोडेर) किन अन्यत्र भौंतारिने ? किन कष्ट र तप गरेर तपस्यातिर लाग्ने ? किन सम्पूर्णतालाई लत्याएर अपूर्ण र क्षणिकतातिर आफूलाई मोड्ने ? यति सोच्दासोच्दै त्यहाँको वातावरणमा शून्यता छायो मतलब नृत्य सकिएको रहेछ । शून्यतालाई भङ्ग गर्दै उनले सोधिन्– "यहाँको नृत्य र साङ्गीतिक माहौल कस्तो लाग्यो ?" मैले भनें– "एकदमै उत्कृष्ट र वर्णनै गर्न नसकिने ।" त्यसपछि उनले इशारा गर्नासाथै सबै जना गायब भए (हराए) । हामीबीच निकै बेर भलाकुसारी भयो । समय यत्ति नै त भनेर म उल्लेख गर्न सक्दिन तर पनि मलाई लाग्यो– जिन्दगीको ठूलै हिस्सा उनीसँग वार्तालापमा बिताएँ । वार्तालापकै क्रममा उनले मसँग तपस्या, ध्यान, मन्त्र आदि विभिन्न विषयमा निकै चर्चा, परिचर्चा गरिन् जसबाट मेरो लागि आध्यात्मिक उच्चतामा पुग्नको लागि ठूलै अध्याय थपिएको महसुस गरेँ र जुन आध्यात्मिकतातर्फ बढ्नको लागि निकै टेवादायी, निकै प्रेरणादायी थियो । सङ्गीतले के के गर्न सकिन्छ भन्ने बारेमा उनले निकै बताइन् । उनका अनुसार सङ्गीतले पनि आध्यात्मिकता र ईश्वर प्राप्तिमा ठूलो भूमिका खेल्दोरहेछ । अर्थात् भनौं सङ्गीतको माध्यमबाट पनि ईश्वरत्व प्राप्त गर्न सकिन्छ । यसको मानव योनिमा समेत ठूलो भूमिका रहन्छ । सङ्गीत पनि वेदअन्तर्गत नै पर्दछ यसको माध्यमबाट शान्ति र परम आनन्द प्राप्त हुन्छ जसको समुचित प्रयोगबाट मानव जीवनमा रोग, शोक र भोग तीनै चिजको निवारण समेत गर्न सकिन्छ, भगवान् प्राप्ति गर्न सकिन्छ । यसबाट पशुपक्षी, जीव-जीवात्मा, परमात्मा, वनस्पति सबैमा प्रभाव पर्दछ ।

सङ्गीतको प्रत्येक ध्वनिमा मंत्रस्वरूपमा निहित बीजहरू रहन्छन् । अर्थात् भनौं प्रत्येक ध्वनिमा बीज मंत्रहरूको संयोग रहन्छ जसबाट रागहरूको उत्पत्ति हुन्छ जसबाट मृतकलाई जीवित पार्न सकिन्छ । जीवितलाई मृतक बनाउन सकिन्छ । सङ्गीत स्वयम्मा तन्त्र हो । महाकाल र संजीवनीको रूपमा समेत सङ्गीत रहन्छ । त्यस्तै नृत्यको सम्बन्धमा पनि नृत्य एक किसिमको उत्कृष्ट योगको रूप हो जसबाट पनि ईश्वरत्व प्राप्त गर्न सकिन्छ । यसको शुरूआत भगवान् शिवबाट भएको हो । सङ्गीतको शुरुआत भगवान् शिवको डमरूको ध्वनिबाट भएको हो । समस्त ब्रह्माण्डको उत्पत्ति हुँदा सङ्गीतको माध्यमबाट उत्पत्ति भएको थियो । उत्पत्ति प्रकरण ॐकार ध्वनिको सङ्गीतमय गुञ्जनबाट भएको थियो । त्यसैले पनि तपस्या गर्दा ॐकार ध्वनिबाट शुरुआत गरिन्छ र अन्त्य पनि ॐकार ध्वनिबाट नै गरिन्छ । यसरी उनले कुराकानीको योग वा नृत्यबाट पनि सङ्गीतबाट जस्तै रोग, शोक र भोकको निवारण हुने, ईश्वरत्वको साथै अमरत्व पनि प्राप्त हुने कुरा बताइन् ।

उनको कुरा सुनेर म पूर्णरूपमा हराएको थिएँ । म उनको कुरा सुनिरहेको होइन बरु म ती सबै दृश्य आफ्नै आँखाले देखिरहेको छु । यी सब मेरै अगाडि भइरहेका छन् । मेरो शून्यतालाई भङ्ग गर्दै उनले स्वयं भनिन्– यदि यी सब हेर्न चाहेको खण्डमा उनी त्यहाँ अनुमति लिएर देखाउन पनि सक्छिन् । मैले पनि हुन्छ भन्ने सङ्केतस्वरूप टाउको मात्रै हल्लाएँ ।

तत्पश्चात् त्यहाँबाट हामी प्रस्थानको लागि तयारी भयौँ । उनले आँखा चिम्लेर नमस्कार मुद्रामा बसी खै के हो मन्त्रोच्चारण गरिन् र मेरो हात समातिन् । त्यसपछि मलाई त केही होशै भएन । हामी एकैचोटि एकदम नौलो र नयाँ संसारमा प्रवेश गरिसकेका रहेछौँ । उनीसँग बस्दा मलाई एकदम नौलो अनुभूति भइरहेको थियो । ममा एकदम शून्यभाव थियो । लाग्दथ्यो कि म प्रायः चेतनाशून्य भएर, अबोध भएर एक विशिष्ट व्यक्तित्वको अगाडि शिष्यरूपमा बसी शिक्षा ग्रहण गरिरहेको छु । ममा एकाएक लज्जा, सङ्कोच, डर, भय सबै व्याप्त भएर आए । उनको अगाडि म एकदम अन्जान र अज्ञानी व्यक्ति हुँ । त्यहाँ पुगिसकेपछि कहाँ आयौँ भन्ने भावले मैले उनीतिर दृष्टि लगाएँ । सायद उनले मेरो भाव बुझिछन् क्यारे, उनले बताइन् कि यसलाई गन्धर्वलोक भनिन्छ । गन्धर्वलोक र अप्सरालोकको निकै घनिष्ट सम्बन्ध रहेछ । त्यहाँ पुगिसकेपछि एक ठाउँमा निकै भव्य महल देखापऱ्यो । उनले कुन्नि कसरी हो विशिष्ट पारामा, सायद यहाँ अभिवादन यसैगरी गरिन्छ होला, सम्मानपूर्वक नमस्कार गरिन् वा भित्र जाने अनुमति पो हो कि गरिन् । तत्पश्चात् हामीलाई भित्र जान दिइयो । लाग्दथ्यो भव्य समारोह भइरहेछ । सबै आफ्नै वाद्यवादनमा मस्त देखिन्थे । एकजना भव्य सजिएको बीचको सिँहासनमा विराजमान देखिन्थे । उहाँ गन्धर्वराज हुनुहुँदोरहेछ । त्यहाँको वातावरणमा जुन रौनकता थियो त्यसलाई बताउने मसँग शब्द नै छैन ।

वातावरण सङ्गीतमय थियो । म विचित्रको अनुभव, अनुभूतिमा डुब्न थालेछु कि म आफू नै एउटा सङ्गीतको पुञ्ज हुँ । त्यहाँ उपस्थित सबै सङ्गीतका सागर हुन् जहाँ सङ्गीतमय लहर र तरङ्गहरू निरन्तर बगिरहेका छन् । उहाँ (गन्धर्वराज) को व्यक्तित्व, मुहारको सौहार्द्रता, तेजस्विता यस्तो थियो कि जसको वर्णन गर्ने शब्द सायद शब्दकोषमा नै छैन होला । मैले टाढैबाट विनम्रतापूर्वक अभिवादन गरेँ । उनले (अप्सरा) मेरो परिचय गराइन् र उहाँले (गन्धर्वराज) कुराकानीको क्रममा यो बताउनुभयो कि यहाँ आउने अनुमति कमैलाई मात्र छ । मेरो युगौँदेखिको तपस्याले गर्दा यहाँ क्षणिकरूपमा मात्र बस्ने अनुमति मिलेको हो । यहाँ जीव वा निर्जीव (जुन हामी पृथ्वीलोकमा निर्जीवरूपमा मान्छौ) सबैमा सङ्गीतको जादू थियो । यस्तो प्रतीत हुन्थ्यो कि सारा ब्रह्माण्ड नै सङ्गीतको एक पुञ्ज हो जुन बिना कुनै चीजको कुनै अस्तित्व नै छैन । मलाई त्यहाँको बारेमा बुझ्ने जान्ने र त्यहाँ अझै केही बेर बस्ने तीव्र इच्छा हुँदाहुँदै पनि कुन्नि के कारणले गर्दा हो उनले फर्कनु पर्ने कुरा दर्शाइन् र अभिवादन गरी हामी फर्कनपट्टि लाग्यौँ । सायद हुन सक्छ जहाँ रहनको लागि हाम्रो तपस्याको शक्ति समाप्त भइसकेको हुनुपर्छ किनकि पृथ्वीलोकमा भ्रमणको लागि विभिन्न चीजजस्तै पैसा, टिकट, पासपोर्ट, भीसा इत्यादिको व्यवस्था भए जस्तै त्यहाँ जुन ठाउँमा जान पनि तपस्या नै प्रमुख चीज हो । साँच्चै त्यहाँको साङ्गीतिक माहौल देखेर मलाई अन्य कुनै कुराको पनि चाहना नै नभएको जस्तो भयो र मैले आफू र आफ्नो अस्तित्व नै भुलेछु । त्यहाँका वाद्यवादन पनि पृथ्वीलोकका जस्ता नभएर भिन्नै थियो । लाग्दथ्यो कि ती वाद्यवादन स्वयं नै संगीतका तरङ्गहरू हुन् । ठीक त्यस्तै दृश्यहरू, आँखाभरि साँचेर म र उनी फेरि अप्सरालोकमा नै आयौँ ।

उनले कुराकानीकै क्रममा प्रत्येक देवीदेवताका जस्तै प्रत्येक अप्सराहरूको पनि मन्त्र हुने कुरा बताइन् । मन्त्रहरू पनि विभिन्न श्रेणीका र विभिन्न प्रयोजनको लागि बेग्लाबेग्लै हुने कुरा पनि मलाई ज्ञात गराइन् । जस्तै उहाँहरूलाई (अप्सराहरू) प्राप्त गर्ने (सिद्धि गर्ने) खुशी पार्ने, आवाहन गर्ने (सूक्ष्मरूपमा), आवहान गर्ने (स्थूलरूपमा) जस्ता विभिन्न प्रयोजनको निम्ति बेल्लाबेग्लै मन्त्र हुने कुराको ज्ञान भयो । यस क्रममा प्रत्येक अप्सराको मंत्र छुट्टाछुट्टै हुने कुरा अवगत गराउनुको साथै उनको आफ्नै अति गोप्य आवाहन बीज मन्त्र मलाई दिइन् जुन एकदम गोप्य राख्ने शर्तमा थियो, जुन विशेषरूपमा तुरुन्त भेट्नु (सूक्ष्मरूपमा) परेको खण्डमा सूक्ष्मरूपका प्रक्रिया पूरा गर्न समय लाग्ने भएको कारणले गर्दा छिटोछरितोका लागि प्रयोग गरिन्छ । जुन मंत्र तीनचोटि उच्चारण गरेको खण्डमा जहाँ, जुनसुकै अवस्थामा रहे पनि तुरुन्तै उपस्थित हुनुपर्ने नियम रहेछ तर त्यतिखेर त्यहाँ अरू व्यक्ति (तेस्रो) को सामेल (उपस्थिति) हुनु हुँदैन । तर त्यो उपस्थिति क्षणिक हुन्छ जुन विभिन्न दैवी निर्देशन दिन (थाहा पाउन) प्रयोग गरिन्छ र सूक्ष्मरूपमा नै उपस्थिति रहन्छ तर त्यो व्यक्ति क्षमतावान् बनेको खण्डमा मात्र ।..........क्रमशः

# अप्सरासँग पुरुर्भस राजाको विवाह

पुरुर्भस अत्यन्तै असल स्वभावका सज्जन, नैतिकवान्, चरित्रवान् एवं साहसी राजा थिए । उनलाई सबैले माया र सत्यताको प्रतीकको रूपमा सम्मान गर्दथे । एकदिन राजाले अप्सरा उर्वशीलाई भेटे । उर्वशी देवलोकका देवताहरूदेखि दुःखी भएर पृथ्वीमा मनुष्य बस्तीमा बस्न आएकी थिइन् । उर्वशी अद्वितीय सुन्दरी थिइन् । राजाले उनीसँग प्रेम गर्न थाले र उर्वशीले पनि राजालाई प्रेम गर्न थालिन् । एकदिन राजाले उर्वशीसँग विवाह गर्ने प्रस्ताव राखे । उर्वशी राजासँग दुईवटा शर्तमा विवाह गर्न राजी भइन् । उर्वशीका शर्तहरूमा पहिलो उनीसँग भएका दुई भेडाहरू सधैँ रात र दिन नभनी उनीसँगै राख्न पाउनुपर्ने र दोस्रो राति सुत्न जाँदा सधैँ अँध्यारोमा मात्र ओछ्यानमा जाने र उर्वशीले राजालाई दिनमा लगाउने लुगामा मात्र देख्नुपर्ने अन्यथा दुर्भाग्य हुने ।

राजाले उर्वशीका शर्तहरू स्वीकारेपीछि विवाह सम्पन्न भयो । राजा र उर्वशीको दाम्पत्य जीवन सुखमयरूपमा बितिरहयो । उर्वशीले आफू साधारण मनुष्य (मरणशील) होइन भन्ने पनि बिर्सिन् र स्वर्ग (देवलोक) जाने इच्छा पनि राखिनन् ।

उता इन्द्रको राज्य देवलोकमा उर्वशीका संगी अप्सराहरू र गन्धर्वहरू उर्वशी नभएकोले दुःखी थिए । त्यसैले उनीहरू सबै मिलेर उर्वशीलाई देवलोकमा ल्याउन योजना बनाए । यस योजनाअनुसार विश्वभासु गन्धर्वलाई राजा पुरुर्भस र उर्वशीको शयन कक्षमा पठाएर उर्वशीका भेडाहरू चोरेर ल्याउन लगाउँदा भेडा कराएकोले उर्वशी आफ्नो ओछ्यानबाट उठिन् । उनले उठेर चोरलाई समात्न राजालाई आग्रह गरिन् तर राजा शर्त भङ्ग हुने डरले आफ्नो ओछ्यानमा नै बसे । चोरले अर्को भेडा पनि लग्न लागेको थाहा पाएर राजा चोर र भेडाहरू समात्न अगाडि बढेको बेला चोररूपी गन्धर्वले राजातिर उज्यालो बत्ती बालिदियो । उज्यालोमा उर्वशीले राजालाई रातिको लुगामा देखिन् र शर्त भङ्ग भएकोले उर्वशी त्यहाँबाट अलप भइन् । त्यसपछि चोररूपी गन्धर्व र भेडाहरू पनि अलप भए । त्यस शयन कक्षमा राजा मात्रै रहे र उनी ज्यादै दुःखी भएर उर्वशीको खोजीमा दरवार छोडेर पागलजस्तै भई हिँड्न लागे ।

घुम्दाघुम्दै राजा कुरुक्षेत्र भन्ने ठाउँमा आइपुगेको बेला उनले उर्वशीलाई अन्य चार अप्सराहरूका साथमा कमलको फूलको तलाउमा देखे । राजा खुशीले 'मेरी श्रीमती उर्वशी' भनी कराएको उर्वशीले सुनिन् र उनले राजालाई सान्त्वना दिँदै भनिन्– राजा, तिमीले दुःख मान्नु पर्दैन, अर्को वर्ष यसै ठाउँमा आउनू, म तिमीलाई एउटा पुत्र दिन्छु ।

एक वर्षपछि राजाले त्यसै ठाउँमा गएर उर्वशीलाई भेटे । उर्वशीले पहिलो पुत्र आयुष राजालाई दिइन् र भनिन् फेरि दोस्रो वर्ष पनि यहीँ आउनू, म अर्को पुत्र दिन्छु । यसरी प्रत्येक वर्ष राजा उर्वशीलाई भेट्न कुरुक्षेत्र गए र पुत्र पाप्ति गर्दै रहे । राजाले पवित्र मनले उर्वशीसँग जीवन बिताउने इच्छा राखिरहेका थिए । पाँचौं वर्षमा उर्वशीले राजालाई भनिन्– गन्धर्वहरू खुशी भएका छन्, वर माग । राजाले तत्काल भने– उर्वशीसँग सधैँ बस्न पाऊँ । त्यसपछि गन्धर्वहरूले राजालाई आगो भएको एउटा भाँडो दिएर भने– यस आगोलाई लगेर तीन भाग लगाएर देवताहरूमा अर्पण गर्नू, उर्वशी पाउनका लागि प्रार्थना गर्नू । त्यसपछि तिमीले उर्वशीलाई पाउनेछौ ।

राजा त्यो आगोको भाँडो लिएर दरवार आउँदै गर्दा उनले विचार गरे– म कति मूर्ख रहेछु, त गन्धर्वहरूले मलाई एउटा आगोको भाँडो दिँदा म लिएर लुरुलुरु फर्कें । मैले किन उर्वशीलाई ल्याउन सकिन ? त्यसैले त्यस आगोको भाँडोलाई त्यहीँ जंगलमा छोडेर आफ्नो दरबारतिर लागे ।

उनी दरबारमा सुतेको बेला मध्यरातमा बिउँझेर पछुतो मान्न लागे – म कति मूर्ख रहेछु । मैले गन्धर्वहरूबाट पाएको वरदानस्वरूपको त्यो आगो जंगलमा छोड्न नहुने ! राजा त्यस आगोलाई दरबारमा ल्याउनुपर्छ भनेर तुरुन्तै जंगलतिर लागे । तर अचम्म ! राजा आगो छोडेको ठाउँमा पुग्दा उनले त्यस ठाउँमा अश्वथ्थाको रूखमा समीको बिरुवा उम्रेको देखे । उनले फेरि गन्धर्वहरूले भनेको याद गरे । दुवै बिरुवाहरूलाई आफ्नो दरबारमा लगी पवित्र मन्त्रहरू वाचनका साथ बिरुवाहरूका डाँठ एक आपसमा रगडेर आगो निकालेर त्यस आगेलाई तीन भाग लगाएर देवताहरूमा अर्पण गरी उर्वशी पाउनको लागि प्रार्थना गरे । धेरै मेहनत, प्रार्थना र त्याग गरेपछि गन्धर्वहरूले उर्वशी राजालाई सुम्पिदिए । राजा र उर्वशी सधैँ सँगै जीवन बिताएर आनन्दले रहन लागे ।

**कणकणमा गोरख जगाऔं**

# नाथ उपदेश प्रसंगमा अप्सरा प्रकरण

श्री सावर संरचना शक्ति केन्द्रबाट प्रकाशित 'श्री शिव गोरक्ष : नाथंप्रदाय' ग्रन्थको 'नाथ सिद्ध चौरंगीनाथ उपदेश प्रसङ्ग'मा राजा निमीको प्रश्नको उत्तर दिनुहुँदै सप्तम योगेश्वर चौरंगीनाथ भन्नुहुन्छ– हे राजन् ! जो भगवान्का बारेमा अनन्त जन्म कर्म गुणहरूको गणना गर्न चाहन्छ, त्यो त यस्तो भयो कि समुद्रको बालुवाको कणको गणना गर्न खोजे जस्तो, वर्षामा पानीको थोपा गने जस्तो, पृथ्वीका परमाणुहरूको संख्याको गणना गरे जस्तो । हे विदेह ! तथापि प्रमुख रूपबाट भन्नु पर्दा त्यही परमेश्वर आकाशादि पञ्चमहाभूत उत्पन्न गरी ब्रह्माण्डभित्र स्वयं प्रवेश गर्नुभयो । त्यसपछि उहाँ पुरुषको नामले विख्यात् हुनुभयो जसबाट ब्रह्मा, विष्णु, रुद्र आदि उत्पन्न हुनुभयो । उहाँहरूले सृष्टि, स्थिति, लय आदि गर्नुहुन्छ । दक्षप्रजापतिकी कन्या, धर्मकी पत्नीको गर्भबाट नर नारायण नामका दुई अवतार हुनुभयो जो यद्यपि नारदादि ऋषि योगीहरूको मण्डलीको साथमा हिमालयको बद्रिकाश्रममा तपस्या गर्नुहुन्छ । त्यहाँ उहाँहरूको योगबलबाट भयभीत इन्द्रले एक समय तपस्या भङ्ग गर्नको लागि सखा वसन्तका साथ कामदेवलाई अप्सराहरूसहित पठाए । तत्पश्चात् कामदेवले त्यहाँ वसन्त ऋतु प्रवृद्ध हुनासाथ मेनका, रम्भा, मञ्जुघोषा, तिलोत्तमा, घृताची, सुकेशी आदि प्रमुख अप्सराहरूको लीला, विलासिताका साथ समाधि खण्डित गर्ने पूरा प्रयत्न गरे । त्यसबेला नर नारायण कामदेवको मूर्खता देखी हाँस्न लाग्नुभयो । लज्जा नतमस्तक मदन शापभयले काँप्न लाग्यो । यस्तो भयभीत भएको देखी नर नारायण भन्नुहुन्छ– हे सपरिवार मदन ! डराउनु पर्दैन । तिमीहरूलाई स्वागत छ, आतिथ्य ग्रहण गर र आश्रमलाई कृतार्थ गर किनकि जहाँ अतिथिको सत्कार हुँदैन, त्यहाँ देवताहरूको बास हुँदैन ।' यति सुनेर लाजले शिर झुकाएर हात जोडी अप्सराहरूका साथ कामदेवले नर नारायणको स्तुति गर्न लागे– हे देव ! हजूर मायाबाट रहित हुनुहुन्छ, निर्विकार हुनुहुन्छ, निरञ्जन, निष्काम, निस्पृह हुनुहुन्छ । हजूर योगेश्वर हुनुहुन्छ । यस्ता हजूरको चरण विन्दुको सेवा समर्पण सुर, नर, मुनिजन सबैले सदासदा गर्दछन् । यस्तो हजूरको

तपस्या भङ्ग कसले गर्न सक्दछ ? भङ्ग गर्न खोज्नेहरू नै भङ्ग हुन्छन् । हे नाथ ! हजूरको सेवक नै स्वर्गलाई उल्लंघन गरी वैकुण्ठमा अकुण्ठित गतिले प्रवेश गर्दछन् । हजूरको अगाडि विचरा इन्द्र के नै हुन् र ! जसले हजूरको नाम मात्र स्मरण गर्दछन्, यस्ता सारा भक्तहरूको विघ्न हटाइदिने हजूरलाई कसले के विघ्न गर्न सक्दछन् ? मनुष्य दुई प्रकारका हुन्छन् । जो हजूरको भक्ति त्यागी भोगादि कर्म गर्दछन्, उनीहरू प्रायः क्रोधादिको वशमा परिरहन्छन् अथवा हामीजस्ताका वशमा आइपुग्छन् । जो हाम्रो वशमा आइपुग्छन् उनीहरू क्षणिक स्वर्गभोग भोग्दछन् र जो क्रोधको वशमा पर्दछन् उनीहरू अति नै क्लेश गर्न थाल्छन् । कोही तपस्वीहरू भोक, प्यास, शीत, ऊष्ण आदि द्वन्द्व सहिष्णु भएर पनि रिस, क्रोधमा वशीभूत भई अग्निको समान गोस्पद जलमा डुब्दछन् र चिरकालदेखि सञ्चित तपस्यालाई पनि निष्फल गर्दछन् ।

हे राजन् ! कामदेवले नर नारायण ऋषिको यस्तो स्तुति गरेपछि उनीहरूको गर्व हटाउनको लागि उहाँहरूले यो गबलले हजारौं दिव्य स्त्रीहरूको सृष्टि गर्नुभयो जसको रूप, लावण्य देखी समस्त लोकलाई मोहित गर्ने अप्सराहरू र जगत्लाई उन्मादन गर्ने मदन पनि एकै साथ मोहित भए । सहस्र चन्द्रमाको अगाडि तारागणहरू निस्तेज भए जस्तै गरी उनीहरू पनि लज्जित भए । उनीहरूको यस्तो स्थिति देखी मन्द हाँसोका साथ नर नारायण भन्नुहुन्छ– हे मन्मय ! इच्छानुसार यीमध्ये कुनै कामिनीलाई माग ।' तब कामदेव निरुत्तर भई शिर तल झुकाई बसिरहे । ऋषिहरूले बारम्बार आज्ञा दिनाले रूप-सम्पदाले त्रिलोकलाई वशमा राख्ने उर्वशी नामकी स्त्रीरत्न ग्रहण गरी नर नारायणको चरणमा प्रणाम गरी स्वर्गको लागि प्रस्थान गरे । अमरावतीको मुधर्मा सभामा सिंहासनमा देवेन्द्रको सेवामा उर्वशीलाई समर्पित गरी यो वृत्तान्त सुनाए जसबाट इन्द्र लज्जित एवं विस्मित भए ।

जय गुरुदेव !

# प्रेमिका होस् त यस्ती...

*अप्सराको नाम हामीमध्ये धेरैले सुन्दै आइरहेको भएता पनि अप्सरालाई भेट्ने, उनको सहचर्य प्राप्त गर्ने सौभाग्यशालीहरू भने विरलै हुन्छन्। यस्तै विरलै भाग्यशालीहरूमध्येका एकजनाले अप्सरासँग गरेका भलाकुसारी र साक्षात्कारलाई यहाँ प्रस्तुत गरिएको छ।*

के होला त्यो जसले कुनै स्त्री वा पुरुषलाई जीवनमा एक्लै हिँड्दाहिँड्दै अचानक बाँध्दछ, आफैमा हराएको मानिस कसैका लागि छटपटिन थाल्छ, कसैको एक झलक पाउन तड्पिन थाल्छ, जबसम्म उसको एक झलक पाउँदैन तबसम्म शून्य-शून्य जस्तो लाग्दछ– यस्तो किन हुन्छ ? के कारण लुकेको होला यसको पछाडि ? के अनुहारको सुन्दरता, के शरीरको आकर्षण नै हृदयको धड्कन बढाउने कारण होला त ?

'प्रेमिका' शब्दलाई सुन्नेबित्तिकै हामी सतर्क हुन्छौं कि कहीं कतै कसैले थाहा नपाओस्। तर आजभोलि प्रेमिकाको विषयमा सारा चिन्तन एकांगी र वासनापूर्ण भएको छ। प्रेमिकाको तात्पर्य केवल शरीरसम्म मात्र सीमित रहन्न। यो त पूर्ण स्वस्थ र सुरुचिसम्पन्न पुरुषको रत्नजडित मुद्रिका हो। प्रेमिकाको तात्पर्य यो हो कि जसले आफ्नो शरीर तथा भावभंगिमाबाट मात्रै हो इन बरू आफ्नो हृदयको सम्पूर्ण आन्तरिकता र मधुरताबाट कसैको जीवनमा प्रत्येक पल छाउँछ। आन्तरिकताको अनुभूति नै हृदयसम्म ओर्लेर पूर्ण तृप्ति दिन्छ। यस जगत्का स्त्रीको प्रेम त दैहिक वा छलपूर्ण हुन सक्छ तर अप्सरासँग यस्तो सम्भव छैन। अप्सरा त एउटी यस्ती नारी हुन् जसले कठोरभन्दा कठोर हृदय भएकाहरूलाई पनि प्रेमी बनाउन सक्छिन्। एकपटक प्रेमी बनिसके पछि जो कोहीलाई पनि अप्सराका अतिरिक्त कोही पनि स्मरण नै हुँदैन, उसका अतिरिक्त कसैको इच्छा र कामना हुँदैन।

मैले रंजिनी अप्सरा साधना गरेको थिएँ। मन्त्रको विशेष प्रभावबाट तिनी मेरो सामु पहिलो दिन नै प्रकट भइन्। साँच्चै नै आफ्नो नामजस्तै रंजिनी थिइन् उनी। ठूलठूला आँखा र अत्यन्तै सरलतासँग हेर्ने उनको स्वभावले पहिलोपटक भेट भइरहेको भन्ने कुरा नै बिर्साइदिएको थियो। केही संकोच र केही निसंकोच उनी मेरो नजिक आइन्। आँखा केही झुकाएर र केही संकोच माने जस्तो गरेर उनले मेरो हातलाई समातिन्। नरम र शीतल स्पर्शबाट म विभोर भएँ तर आफैलाई संयमित गरेँ। एउटा अनिन्द्य सौन्दर्य मेरो अगाडि उभिएको थियो। उनको ठूलठूला आँखाले बताइरहेको थियो– साँचोमा ढालिएको सौन्दर्यको पान गर। साँचै नै शीरदेखि पाउसम्म उनी साँचोमा ढालेर बनाएकी जस्तै नै थिइन्। पछाडिपट्टि बाँढिएको बाक्लो कपाल, सानो गोलो मुहार अत्यन्तै फक्रेको थियो। घुँडासम्म छुने लामो कलाप पूरै फूल र गहनाले सजिएको थियो। गोरो निधारमा सानो चम्किरहेको सुनौलो रातो टिका, नाकमा सजिएको हिराको फूली, बीचका आँखा अत्यन्तै टल्किरहेको थियो। स्वस्थ चम्किलो कपाल, सानो चिउँदो, नरम र गुलाबी कानमा झुण्डिरहेको स्वर्ण कुण्डल र सानो कोमल गला अद्वितीय थियो। वक्षस्थललाई मात्र ढाकेको रेशमी सुनौलो रातो वस्त्र र पछाडि पिठ्यूँमा बाँढिएको सानो वस्त्रको गाँठो यस्तो लाग्दथ्यो कि खुला तटमा कुनै गुलाब झरेको होस्। नाभीको तल घुँडासम्म जाँघमा कसिएको वस्त्रले उसको कम्मर र गहिरो नाभीको सौन्दर्यलाई मुखरित गरिरहेको थियो र रातो रङको कपडामा यौवनले वातावरण नशाले युक्त भइरहेको थियो। पाउदेखि शीरसम्म आफ्ना अङ्ग-प्रत्यङ्गलाई जुन प्रकारले सजाएकी थिइन्, त्यसले उनको यौवनलाई श्रृङ्गारित गर्नुका साथै सुरुचिप्रियतालाई दर्शाइरहेको थियो। खुट्टाका एक-एक औंलाको श्रृङ्गारलाई उनले मन लगाएर गरेकी थिइन्। म मुग्ध भएर एकनाशले उसको श्रृङ्गारलाई भन्दा पनि उसको सुरुचिप्रियतालाई नियालिरहेको थिएँ, उसको व्यवहारलाई निरीक्षण गरिरहेको थिएँ। उसले जुन प्रकारले अगाडि बढेर मेरो हातलाई थामिन्, यसबाट आफ्नो प्रेम र समर्पणलाई केही नबोलीकन नै उनले मलाई भनेकी थिइन्। उसको अङ्ग-अङ्गबाट कान्तिको साथमा सुगन्ध पनि आइरहेको थियो। साधनाको पहिलो दिनमा नै साधना सफल भएमा कुनै पनि अप्सरालाई भविष्यका लागि वचनवद्ध मात्र गर्न सकिन्छ र मैले पनि उसलाई फूलको हार, पान, इत्र दिएर स्वागत गरेर यस परम्परालाई निभाएँ। साधनाको दुई दिनसम्म म अलि व्यस्त रहेकोले उनलाई बोलाएर साधना सफलताको जाँच गर्न सकिन। तेस्रो दिनमा एकान्त ठाउँमा मैले एक्लोपनको महसुस गरिरहँदा उसको आवाहन मन्त्रको निश्चित संख्या उच्चारण गरेर उसलाई बोलाएँ। रंजिनी आफ्नो वाचानुसार मेरो सामुन्ने आएर मादक गन्धका साथ बसिन्। केही मोहित गर्ने हाउभाउद्वारा बेलाबेलामा परेली उठाएर मलाई हेर्दै चुपचाप खुट्टाको औंलाले जमीनलाई कोट्याइरहेकी थिइन् उनले। मैले उनलाई हेरेँ। मैले केही भन्नु अगाडि नै उनले भनिन्– 'दुई दिनदेखि मेरो लागि तिमीसँग समय नै थिएन।' मैले उसको आँखामा एकटकसँग हेरेर मुस्कुराएँ।

उनको गुनासोले भरिएको नरम स्वरले मेरो तनावलाई हावामा विलीन गरायो ।

मैले प्रेमिकाको अर्थ रंजिनीको निकटता पाएपछि मात्र बुझ्न सकेँ र रंजिनीले पनि सबै बन्धन तोडेर प्रेमिकाले जस्तै मसँग व्यवहार गर्न थालेकी थिइन् । पछि-पछि त मलाई आवाहन मन्त्रको पनि आवश्यकता परेन । उनी हरपल मेरो साथमा रहन लागिन् । म समूहमा हुँदा उनी अदृश्य भएर मेरो साथमा रहन्थिन् र अलि एकान्त हुँदा तुरुन्तै पूर्णरूपमा श्रृङ्गारित भएर मेरो सामु आउँथिन् र मित्र बनेर कहिले आफ्नो रूप, यौवनले मलाई मुग्ध गर्दथिन् त कहिले बोलीचालीको कलाले सन्दर्भ अन्तै लगेर मेरो तनावलाई हटाउने प्रयास गर्थिन् । यति गर्दा पनि मैले मानिन भने आफ्नो मादक गन्धले मेरो रोम-प्रतिरोमलाई सुगन्धित गरेर जबसम्म म हाँस्दिन थिएँ तबसम्म उनी मबाट अलग हुँदैन थिइन् । क्रमश: उनको व्यवहारबाट म यति प्रभावित भएँ कि उनी बिना एक क्षण पनि रहन नसक्ने भएँ । अस्तु ।

## अप्सराहरुको उत्पत्ति

अप्सराहरूको जन्म दूध सागरबाट भएको कुरा पौराणिक कथाहरूमा वर्णन गरिएको पाइन्छ । एंकर वाट (Angkor Wat) मन्दिरका भित्ते चित्रहरूमा अप्सराहरूको जन्मको बारेमा चित्रण गरिएको छ । यस चित्रणअनुसार धेरै वर्षअघि देवताहरूले अमरत्व प्राप्त गर्ने वस्तुको खोजी गरिरहेको बेला थाहा हुन आयो कि जसले अमृतपान गर्दछ उसले अमरत्व प्राप्त गर्दछ । यो कुरा पनि थाहा हुन आयो कि अमृत दूध सागरमा गोप्यरूपमा रहेको छ । नश्वर हुनबाट चाँडै नै छुटकारा पाउन सबै देवताहरू एकजुट भएर अमृतलाई प्राप्त गर्ने योजना भयो । जसअनुसार वासुकी नागलाई डोरीको रूपमा समुद्रसँगै रहेको चोसो परेको पर्वतमा बेर्ने र दुई समूह बनाएर नागलाई तान्ने (दही मथे जस्तो मथ्ने) । तर देवताहरूले मात्र यस कार्यलाई सम्पन्न गर्न नसक्ने देखिएकोले आफ्ना शत्रु दानवहरूलाई पनि अमृतको लोभ देखाएर वासुकी नागको टाउकोको भागतिर तान्न लगाए, आफूहरूले पुच्छर समातेर तान्न थाले । यसरी देवताहरू र दानवहरूले धेरै दिनसम्म कडा परिश्रम गरेर समुद्र मन्थन गर्दा उक्त दूध सागरबाट करिब ६ करोड वस्तुहरूसँगै सुन्दरीहरू पनि बाहिर निस्कन थाले । समुद्र मन्थनको फिँज र पानीबाट उत्पन्न सुन्दरीहरूलाई अप्सराहरू भनेर नाम दिइयो ।

# संसारको कुनै पनि मुलुकमा हुने अत्याचारको विरोध गर्नु मानवीय धर्म हो ।

# योगिनी-नायिका स्तोत्र

*।। श्रीउन्मत्त-भैरव उवाच ।।*

अस्याः स्तोत्रं प्रवक्ष्यामि, सावधानावधारय ।
साक्षात् सिद्धिं समाप्नोति, योगिनी स्तोत्र-पाठतः ।।

**।। मूल पाठ ।।**

**ध्यान**

हृदयाम्भोरुहे ध्याये, सुन्दरीं नव-यौवनाम् ।
किङ्किणी-जाल-मालाढ्यां, त्रिपुरां पद्म-लोचनाम् ।।
वराभय-करां धन्यां, योगिनीं काम-चारिणीम् ।
ॐ वन्दे योगिनि ! योग-सिद्धि-धनदे ! बन्धूक-पुष्पोज्ज्वले,
नानालंकृति-विग्रहे ! सुर-मणि श्रीदेव-कन्ये प्रिये !
दारिद्रयं हन मे सुखं प्रिय-पदं वाञ्छादि-सिद्धिं देहि,
राज्यं मित्र-कलत्र-पुत्र-धनदे ! मातः ! समाधेहि मे ।।१।।
तवांघ्रि-कमल-द्वयं तरुणि देवते ! दारुणं,
महा-भय-समाकुलं हर भजामि भू-मण्डले ।
कृपां कुरु ममालये स-परिवार-देवैः सह,
सदा भव हि भागिनी क्षम कुलाप-तापं मुदा ।।२।।
त्वमेका योगिनी कन्या, पिङ्गला युवती रतिः ।
गौरी विद्या-धरी श्यामा, प्रसन्ना भव सर्वदा ।।३।।
त्वं सन्ध्या खेचरी विद्या, यक्षिणी भूतिनी प्रिया ।
त्वमेका पातु मां धात्री, स्वर्ण-पात्र-कराम्बुजा ।।४।।
हिरण्याक्षी विशालाक्षी, चपला नागिनी जया ।
प्रसन्ना भव शब्दाख्या, कामिनी काम-दायिनी ।।५।।
सिद्धिदा कुल-मन्त्राणां, डाकिनी खेचरी भव ।
नमामि वरदे देवि ! योगिनी-गण-सेविते ! ।।६।।
तवांघ्रि-युगलं कान्ते ! चन्द्र-कान्ति-सुमालिनी ।
अमले कमले देवि ! दारिद्र्य-दोष-भञ्जिनी ।।७।।
वन्दे त्वां मनसा वाचा, प्रसन्न भव सुन्दरि !
कलि-काल-कृत देवि ! खेचरी-शत-नायिके ।।८।।
धन-सिद्धिं देहि शीघ्रं, समागच्छ गृहे मम ।
सिद्धिदा विधुराणां च, अकाल-मृत्यु-नाशिनी ।।९।।
दश-वर्ष-सहस्राणि, स्थिरा भव कुले मम ।
वाक्य-सिद्धि-प्रदा देवी, पद्मराग-सुमालिनी ।।१०।।
सर्वालङ्कार-भूषाङ्गी, प्रसन्ना भव सर्वदा ।
माया-बीजात्मिका देवी, वधू-बीज-समाकुले ।।११।।
सिद्धि-द्रव्यं सदा देहि, कान्ता भव ममालये ।
विचित्राम्बर-शोभाङ्गी, नानालङ्कार-वेष्टिते ! ।।१२।।
विम्बार-मणि-सूर्याभे, चन्द्र-कान्ति-प्रभोज्ज्वले ।
स्मेराननाब्जे कामेशि ! ममाज्ञापय दुर्लभम् ।।१३।।
कामेशि ! परमानन्द-राज-भोग-प्रदायिनी ।
सिद्धिदा वरदा माता, भगिनी वा भव प्रिया ।।१४।।
तवाज्ञा-किङ्को देवि ! पूजयाम्यहमादरात् ।
ममाग्रे संस्थिरा भूत्वा, सिद्धिदा भव सर्वदा ।।१५।।
कौलिनी गगनस्था त्वं मम पार्श्व-चरी भव ।
शत-वर्ष-सहस्राणि, मामेकं रक्ष सेवकम् ।।१६।।
त्यामेकां जगतां देवि ! सिद्धि-विद्यां नमाम्यहम् ।
ममाङ्के चैव पार्श्वे त्वं, कामिनी भव मे सदा ।।१७।।
दश-वर्ष-सहस्राणि, सिद्धे ! कमल-लोचनाम् ।
वनिता भव मे नित्यं, नित्यं देहं कुरु प्रिये ।।१८।।

**।। फल-श्रुति ।।**

एतत् स्तोत्रं पठेद् विद्वान्, ध्यानाभ्यास-समन्वितम् ।
पक्वान्नं नारिकेलं वा, खण्ड-मिश्रं निवेदयेत् ।
सिद्धि यच्छन्ति भूतिन्यः, स्तोत्र-पूजा-प्रभावतः ।।

*।। वृहद्-भूत-साधना-डामरे महा-तन्त्रे नायिका स्तोत्रं सम्पूर्णम् ।।*

## मनको मन्दिरमा गुरुलाई सजाऔं

सहस्रारमा धारण गरौं पूज्य गुरुदेवलाई
हृदयको कोठालाई सधैं खुला राखौं
शक्तिरूपी माताहरूलाई बास दिन सकौं ।
बाहिरी देह न्वाई ध्वाई सफा सुग्घर पाछौं
त्यसैगरी भित्री मनलाई पनि सफा पारौं
कति कति जन्म भइसक्यो होला हाम्रो
केही पनि पत्ता नपाई बित्यो जीवन हाम्रो ।
कुन जन्मको के प्रतापले आज यहाँ जन्म्यौं
कुन दिनको के कर्मले गुरुको पास आयौं
जन्म हाम्रो सफल हुने भयो अब आज
आफ्नो दर्द पोख्न पाउने भयौं गुरु माझ ।
हजूरले नै पठाउनुभो यो धर्तीमा आज
हजूरलाई चिन्न सकूँ दुनियाँको माझ
लौन गुरु सुनिदिनोस् यो दुःखीको बिलौना
हामी पनि बन्न सकौं हजूरकै खेलौना ।
मनलाई सधैं सफा राखी मन्दिर बनाऊँ
मनभित्रको मन्दिरमा गुरुलाई सजाऊँ
शक्तिरूपी गुरुमाता तिमी आइदेऊ न
नजानेका कुराहरू लौन सिकाइदेऊ न ।
मनभित्रको अँध्यारोलाई हटाएर फाली
शान्तिरूपी दीयो बत्ती बस्न सकौं बाली
गुरु कृपा भयो भने सबै काम बन्छ
अशान्ति र अन्धकारको पनि नाश हुन्छ ।
इष्टमित्र छोराछोरी घर परिवार
मायाजालमा बाँधिएर जीवन जान्छ खेर
मेरो भन्ने आज यहाँ केही पनि छैन
एक्लै आयौं एक्लै जान्छौं लानु केही छैन ।
दुई दिनको जिन्दगी हो किन फाल्छौ खेर
जीवन अब सफल पारौं गुरु पाउ परेर
गुरु सेवा गर्न सके जीवन पार लाग्ला
यो मनको कालो मैलो सबै हटी जाला ।

–मधुकुमारी रायमाझी
भाटभटेनी, काठमाडौं ।

# ध्यान ! ध्यान !! ध्यान !!!

**तान्त्रिक साधना तान्त्रिक ध्यान मानव जीवनको वास्तविक ज्ञान**

परमपूज्य सद्‌गुरुदेवहरूको असीम कृपाले सिद्धाश्रम शक्ति केन्द्रमा विभिन्न तहका तान्त्रोक्त ध्यानका कक्षाहरू सञ्चालन भइरहेको हुनाले उक्त ध्यानका कक्षाहरूमा प्रवेशका लागि केन्द्रलगायत विभिन्न सम्पर्क कार्यालयहरूमा सम्पर्क राख्नुहोला ।

## सिद्धाश्रम शक्ति केन्द्र

बसुन्धरा, काठमाडौं ।

शास्त्रहरूमा सौन्दर्यलाई जीवनको उल्ल
उत्साह मानिएको छ। यदि सौन्दर्य छैन भने जीवन
र उदास हुन जान्छ। हामीमध्ये अधिकांश मा
यस्तो जीवन बाँचिरहेका छन् कि जसको ओठमा मु
रित्तिसकेको छ जसले गर्दा हामी प्रयत्न गरेर पनि
सक्दैनौं, उन्मुक्तरूपमा खित्का छोड्न सक्दैनौं।

यसको कारण यो हो कि हामीले सौन
परिभाषालाई बिर्सिसकेका छौं। सौन्दर्य साधना
जीवनमा हुँदै भएन। शास्त्र हेर्ने हो भने देव
ऋषिहरूले सौन्दर्यसँग सम्बन्धित साधना स
गरेका कैयौं उदाहरण पाइन्छन्। इन्द्रसभामा
अप्सराहरूको नृत्य चल्दछ, वशिष्ठ आश्रममा
रूपमा अप्सराहरूको निवास थियो। विश्वामित्रले
साधनाको माध्यमबाट जीवनमा पूर्णता प्रदान गर्नु
थियो। यति मात्र होइन संन्यासी शंकराचार्यले
सौन्दर्यात्मिका शशिदेव्य अप्सरा साधना सम्पन्न ग
आफ्ना शिष्यहरूलाई सम्बोधित गरेर भन्नुभएको
कि साधनाको माध्यमबाट साधकलाई यो विश्वा
जान्छ कि उसको आफ्नो मनमा र आफ्नो इन्द्रिय
पूर्णत: नियन्त्रण छ, यसको माध्यमबाट जीवनक
प्रमुख वृत्तिहरू जसले जीवनमा आनन्द र ह
निर्माण गर्दछन्, ती वृत्तिहरू उजागर हुन्छन् र
दीर्घायु प्राप्त गर्नमा सफल हुन जान्छ। यस साध
माध्यमबाट व्यक्तिको जीवनमा अर्थ सुख, आन
तृप्तिको कुनै प्रकारले पनि न्यूनता रहन पाउँदैन

शास्त्रमा १०८ अप्सराहरूको विवरण पाइ
यी सबै अप्सराहरूको साधनासम्बन्धी पनि विस्तार
वर्णन गरिएको पाइन्छ। कुनै अप्सराको माध्यमब
सौन्दर्यलाई अंकित गर्न सक्षम हुन सकिन्छ। अप्स
तात्पर्य एउटा यस्तो देवत्वपूर्ण सौन्दर्ययुक्त सोह्र
नारी प्रतिमा हो जो मन्त्रको माध्यमबाट पूर्णत:
भएर साधकको दु:खमा सुखको बिजुली चम्काउन
हुन्छिन्, उसको तनावको क्षणमा आनन्द प्रदान
सक्षम हुन्छिन्। तिनी नित्यरूपमा दृश्य वा अदृश्य

# कार प्रतिमा

ास र
निरस
निसले
ुस्कान
हाँस्न

दर्यको
हाम्रो
ता र
म्पन्न
नित्य
स्थायी
अप्सरा
भएको
पनि
रिपछि
थियो
स हुन
यमाथि
का ती
ास्यको
मनुष्य
धनाको
न्द र
न ।
न्छ र
रपूर्वक
बाट नै
सराको
वर्षीय
अधीन
समर्थ
न गर्न
रूपमा

साधकका साथ रहन्छिन् र प्रियतमाको रूपमा उसको प्रत्येक प्रकारका इच्छा पूर्ण गर्दै रहन्छिन् ।

प्रियको तात्पर्य प्रदान गर्नु हो, जसले लिने इच्छा राख्दैन, जसमा केवल सुख र आनन्द दिने भावना मात्र हुन्छ । अप्सराले आफ्नो विचारबाट, आफ्ना कार्यहरूबाट, आफ्नो व्यवहारबाट र आफ्नो साहचर्यबाट साधकलाई ती सबै प्रदान गर्दछिन् जुन उसको इच्छा हुन्छ ।

र, यो इच्छा साधकको विवेकमाथि निर्भर गर्दछ । यो आवश्यक छैन कि अप्सरा केवल भोग्याको रूपमा मात्र रहन्छिन् । मधुर वार्तालाप, सही मार्गदर्शन, भविष्यको पथप्रदर्शन, निरन्तर धन प्रदान गर्ने क्रिया पनि अप्सराको माध्यमबाट सम्भव छ । यसैले अप्सरा साधना साधकहरूका लागि, युवकहरूका लागि र वृद्धहरूका लागि पनि समानरूपमा उपयोगी मानिन्छ, यति मात्र होइन, स्त्रीहरूका लागि पनि अप्सरा साधनाको विशेष महत्त्व बताइएको छ जसबाट उनीहरूलाई एउटा अभिन्न सखी प्राप्त हुन्छ र जीवनमा आनन्द र उत्साह प्राप्त हुन्छ ।

अप्सरा सौन्दर्यको साकार प्रतिमा हो । एउटा यस्तो सौन्दर्ययुक्त शरीर, एउटा यस्तो सुगन्धित फूलहरूले भरिएको टोकरीजस्तै लचिकएको कमनीय नारी शरीर जुन साधकलाई सबै दृष्टिबाट पूर्णता दिनमा, सुख र आनन्द दिनमा समर्थ छ । त्यसैले अप्सरा साधनालाई उचित र जीवनमा आवश्यक बताइएको छ । यति मात्र नभएर यो त जीवनको आवश्यक तत्त्व नै हुनुपर्छ ।

वर्तमान समयमा पनि अप्सराको प्रत्यक्ष दर्शन र सहचर्य सम्भव छ । जुन प्रकारले हामी रूखहरू, घरहरू देख्छौँ त्यसरी नै अप्सरालाई पनि प्रत्यक्षत: देख्न सक्छौँ । हामीले हावालाई देख्न सक्दैनौँ तर निश्चयका साथ भन्न सक्छौँ कि हावाले हाम्रो जीवनलाई गतिशील बनाइरहेको छ । यसैप्रकार अप्सरा पनि हुन्छिन् र हाम्रो जीवनलाई गति एवं आनन्द प्रदान गर्दै रहन्छिन् र प्रत्यक्षरूपमा पनि अप्सरालाई प्राप्त गर्न सकिन्छ, तिनको स्पर्श प्राप्त गर्न सकिन्छ, साहचर्य प्राप्त गर्न सकिन्छ । अप्सराद्वारा निरन्तर धन, द्रव्य, वस्त्र, आभूषण प्राप्त गरिरहन सकिन्छ ।

जब हामी साधनाको क्षेत्रमा अगाडि बढ्छौँ, आफ्नो मनलाई एकाग्र गरेर साधनाको क्षेत्रमा अगाडि बढ्दा विविध प्रकारका अनुभव हुन थाल्छन्, विविध प्रकारका दृश्य र विम्ब देखिन थाल्छ । साधनामा हामीलाई सफलता प्राप्त भएपछि हाम्रो जीवन नै बदलिन्छ । हामीमा आत्मविश्वास आउन थाल्छ, एउटा निश्चिन्तता प्राप्त हुन जान्छ कि हामी वर्तमान युगमा पनि साधनाबाट सफलता प्राप्त गर्न सक्छौँ । जय गुरुदेव । ❑

# कुण्ठा र चिन्तालाई समाप्त गरेर अमर बन

कृष्णभन्दा पहिले पनि विश्वामित्रले गीता लेख्नुभएको थियो जुन विश्वामित्र गीताको नामले प्रसिद्ध छ। आरुण्ढी वराहले सुन्दर र उच्चकोटिको गीता लेख्नुभएको थियो। राजा जनकले पूरा गीता लेख्नुभएको थियो। द्वापर युगमा कृष्णले गीता लेख्नुभयो। तपाईंलाई आश्चर्य होला कि हनुमान्ले पनि एउटा उच्चकोटिको गीताको रचना गर्नुभएको छ– हनुमान्जस्ता एक शिष्य, एक भक्तले। अष्टावक्रले पनि एउटा गीता लेख्नुभएको छ र यो कृष्णको गीताभन्दा पनि धेरै मूल्यवान् र महत्वपूर्ण छ। त्यसको ज्ञान कृष्णको गीताभन्दा पनि धेरै उच्चकोटिको छ।

यसो भनेर मैले कुनै गीताको न्यूनतालाई औंल्याइरहेको छैन। तर मैले यो बतारहे को छु कि कृष्णको गीताभन्दा पनि धेरै उच्चकोटिको ज्ञान, उच्चकोटिको विचार, उच्चकोटिको चिन्तन यी गीताहरूमा पाइन्छन्। हनुमान्ले जुन गीता लेख्नुभयो त्यो 'हनुमत् गीता'को नामबाट प्रसिद्ध छ र हनुमान्जस्तो शिष्य जसको नाम हामीले बदलिदियौं। पहिले त शब्द एउटै थियो– गुरु र शिष्य। भगवान् र भक्त जस्तो शब्द त थिएन। ऋग्वेदमा वा यजुर्वेदमा भक्तिजस्तो शब्द आएको पनि छैन, भगवान् जस्तो पनि कुनै शब्द आएको छैन। ब्रह्म शब्द त पाइन्छ, देवताहरू भन्ने शब्द पाइन्छन्। भगवान् शब्दको उच्चारण र भक्तिको उच्चारण त भक्तिकालमा नै उत्पन्न भएका हुन्। भक्त त केवल चार सय वर्ष पहिलेको स्थिति हो। जुन बेला बाबरको समय, अकबरको समय वा शाहजहाँको समय थियो, तब भक्त शब्दको उत्पत्ति भयो। चाहे कबीर होस्, चाहे सूर होस् जति पनि छन्, सबै एकै युगका थिए। केवल चार सय वर्षको इतिहासमा भक्त र भक्ति उत्पन्न भए र उनीहरूले एउटा नयाँ पद्धति निकाले कि केवल नाम मात्रले पनि भगवान्को प्राप्ति हुन सक्छ। उनीहरूको यो सिद्धान्त फैलियो। उनीहरूको नाम मात्रले भगवान्को प्राप्ति भएन र भगवान् आउनुहुन्छ र हाम्रो दुःख नष्ट गरिदिनुहुन्छ भनेर उनीहरू एउटा काल्पनिक भगवान्को नामको अगाडि झुकिरहे। जब अकबरको अत्याचार अत्यन्तै बढ्यो तब तुलसीले देखे कि हिन्दू जाति धेरै दुःखी छन्। उनले एउटा ग्रन्थ लेखे– 'तुलसीकृत रामचरित् मानस', उनले रामको बडो स्तुति गरे– राम बडो वीर हुनुहुन्छ, धनुषवान् र तीर लिएर युद्धप्रिय हुनुहुन्छ, शत्रुहरूको संहार गर्ने हुनुहुन्छ।

जब-जब धर्मको हानी हुन्छ, जब असुर बढ्छन् तब-तब भगवान् रूपलाई धारण गर्नुहुन्छ र असुरहरूको नाश गर्नुहुन्छ।' यसप्रकारले उनीहरूले एक प्रकारको नायकको उदय गरेर दिए– हिन्दूहरूलाई। त्यस नायकको कल्पनाको सहाराले व्यक्तिले आफ्नो धर्मको रक्षा गर्न सकोस्। तर म यो भन्दिन कि भक्त हुनु गलत छ। हजारौं लाखौं भक्त छन्। मन्दिरमा जान्छन्, हात जोड्छन् र आफ्नो मनोकामना माग्छन्। तर जहाँसम्म पूर्णताको कुरा छ त्यो भक्ति मार्गबाट सम्भव छैन। भक्तिले केवल कीर्तन र मनको सन्तोष दिन सक्छ केही क्षणको लागि। स्थायित्व भाव दिन सक्दैन किनकि त्यो अस्थायी भाव हो। मन्दिरमा जान्छन् तब भाव उत्पन्न हुन्छ। मन्दिरबाट बाहिर निस्केपछि भने भाव समाप्त हुन्छ र यदि कोही चौबीसै घण्टा भक्त बनेर रहन्छ भने पनि त्यो पनि आफैमा उसको श्रेष्ठ विधा हुनेछ। मेरो विचारमा तपाईं गिडगिडाएर, घुँडा टेकेर र एउटा काल्पनिक भगवान्को सहाराबाट जीवनयापन गर्ने कलामा लिप्त हुनुहुन्छ। अष्टावक्रले आफ्नो गीतामा यसै सिद्धान्तलाई दोहोऱ्याउनुभएको छ। यद्यपि त्यसबेला भक्ति भन्ने चीज नै थिएन।

हनुमान्को जीवनमा एउटा प्रसंग आउँछ कि उनी रामको सेवामा चौबीसै घण्टा तत्पर रहन्थे। उनी एकजना भक्त नभई आफैमा उच्चकोटिका ज्ञानी र विद्वान् थिए। उनले धेरै उच्चकोटिको ज्ञान आफ्नो गीतामा लेखेका छन्। एकपटक उनले देखे कि भगवान् राम चार-पाँच दिनदेखि धेरै उदास हुनुहुन्छ, चिन्तित हुनुहुन्छ। उनले एक-दुईपटक चिन्तित हुनाको कारण पनि सोधे। उनले भने– के कार्य छ हजूर मलाई बताउनुहोस्। हजूरको कृपाबाट युक्त छु त्यसैले गर्दा पनि एक्लैले हजूरको तनावलाई समाप्त गर्न म समर्थ छु, म हजूरको सेवक हुँ। यसमा जुन 'भक्त' शब्द आएको छ त्यो

तुलसीले लेखेका हुन्– आफ्नो रामरचित मानसमा 'म हजूरको भक्त हुँ' भनेर । वाल्मीकिले कहिले पनि आफ्नो रामायणमा हनुमान्‌लाई भक्त शब्दले सम्बोधन गरेनन् र वाल्मीकि रामको समयमा ऋषि थिए । सीता जबदेखि रावणकहाँबाट फर्केर आइन् तबदेखि वाल्मीकि आश्रममा रहन लागिन् । वाल्मीकिले जे जति लेखे सत्य लेखे किनकि उनले आँखाले देखेका कुरा लेखेका थिए । उनको समयको घटना थिए ती । तुलसीले उनीभन्दा कैयौँ हजार वर्षपछि लेखे । त्यस समयसम्म त दुई सय रामायण लेखिइसकेका थिए । कुम्भ रामायण अलग हो, तेलंग रामायण अलग हो, वाल्मीकि रामायण अलग हो । यसप्रकार दुई सय रामायण लेखीभ्याइसकेका थिए । दक्षिणमा गयौँ भने एक सय रामायण पाइन्छन् । बेग्लाबेग्लै ऋषिहरूले बेग्लाबेग्लै रामायण लेखेका थिए । त्यसको सार र तथ्य लिएर तुलसीले एउटा ग्रन्थ लेखे जसलाई रामचरित् मानस भनिन्छ । यसैले उनले हनुमान्‌लाई आफ्नो ग्रन्थमा भक्त भने । तर वाल्मीकिले उनलाई सही अर्थमा शिष्य शब्दले सम्बोधित गरेका थिए र भगवान् रामलाई गुरु शब्दले सम्बोधित गरेका थिए । वाल्मीकिले रामलाई सम्राट्‌को रूपमा सम्बोधित गरेका छन्– उनी एकजना राजा हुन् र पथभ्रष्ट राजा हुन् । उनले यसलाई दुई-तीनपटक लेखेका छन् । अयोध्यानजिक उनको आश्रम थियो र रामले उनको आश्रमलाई भत्काइदिए । वाल्मीकिले त्यसभन्दा ८० कि.मी. टाढा आफ्नो आश्रमको पुनर्निर्माण गरे । रामराज्य जसको तिमी कल्पना गरिरहेका छौ, यस्तो राज्यमा पनि यस्ता लडाइँ-झगडा थिए, सामन्तवाद थियो, कैयौँ पत्नीहरू राखिन्थ्यो, दशरथजस्ता राजाले पनि राख्दथे । पत्नीहरूको मोहमा आएर छोराहरूलाई घरबाट पनि निकालिदिन्थे, कुटिलता हुन्थ्यो । एकजनालाई वनवास पठाएर अर्कोलाई राजगद्दीमा बसाउने षडयन्त्र हुन्थ्यो । रामराज्यमा भएका यी कुरा आज पनि हुन्छन् ।

हनुमान्‌ले जब रामलाई सोधे– हजूर चार दिनदेखि मुस्कुराउनु भएको छैन । म के गरूँ ? म कस्तो शिष्य हुँ ? यदि मैले हजूरको जीवनबाट तनाव, दुःखलाई हटाउन सक्दिन भने म के को शिष्य ? मैले घमण्ड गरिरहेको छैन कि जब-जब हजूरको जीवनमा दुःख आएको थियो तब-तब हजूरका लागि म सर्वप्रथम सहायक भएको छु । जब लक्ष्मण मूर्छित भए म औषधि लिन गएँ र सुमेरु पर्वतलाई उठाएर ल्याएँ । जब रामलाई सीताको बारेमा ज्ञात थिएन तब समुद्र नाघेर सीतालाई चूडामणि दिएर हजूरको समीप आएँ । त्यतिबेला हजूरले मलाई भन्नुभयो कि जबसम्म सीताको बारेमा जानकारी हुँदैन तबसम्म म आफ्नो प्राणलाई धान्न सक्दिन । तब मैले सीता जहाँ हुनुहुन्थ्यो त्यस ठाउँको बारेमा हजूरलाई जानकारी दिएँ । जब हजूर र लक्ष्मणलाई रावणले पाताल लिएर गए तब पातालमा गएर हजूर र लक्ष्मणलाई छुटाएर ल्याएँ । यी सबै कार्यलाई मैले विश्वास भावले गरेँ । मेरो कुनै स्वार्थ थिएन । यही भाव थियो कि हजूर गुरु हुनुहुन्छ, स्वामी हुनुहुन्छ, हजूरले पनि मलाई त्यति नै प्रेम दिनुभएको छ, स्नेह दिनुभएको छ जस्तो एक गुरुले आफ्नो शिष्यलाई दिनुहुन्छ वा एक स्वामीले आफ्ना सेवकलाई दिनुहुन्छ । हजूर चार दिनदेखि उदास किन बस्नुभएको छ जबकि राजगद्दी प्राप्त भएको छ, हजूर राजगद्दीमा बस्नुभएको छ । रामले केही बोलेनन् । उनलाई यो चिन्ता थियो कि समाजले मेरी श्रीमतीलाई लिएर किन अनेकौं प्रकारका लाञ्छना लगाइरहेका छन् । म के गरूँ ?

वाल्मीकिले सत्य भनेका छन्–

**अपौरुषं किल राम त्वं गच्छसि ।**

तिमी कायर हौ, तिमी नपुंसक हौ, अपौरुष हौ, तिमीमा पौरुष छैन । यसैले तिमी आफै गएर भेट्‌न सकेनौ र सीतालाई आसपास लगेर छोडिदियौ । मैले त उसलाई आश्रममा ल्याएर राखेँ । मेरी त छोरीसमान् छिन् । तर तिम्रो लागि यो कलंक रहिरहने छ । यसो भनेर पनि म रामप्रति विनय भाव राख्दछु किनकि आफ्ना मातापिता वा आफूभन्दा ठूलाप्रति एउटा विनय भाव नै जीवनमा शोभा दिन्छ । म त इतिहासको कुरा उठाइरहेको छु । यो मंथन चलिरहेको थियो त्यसैले उनलाई तनाव भइरहेको थियो । हनुमान्‌ले चार-पाँचपटक सोधे । तर उनले केही उत्तर दिएनन् । हनुमान्‌को मनमा यही थियो कि म आफ्नो गुरुलाई तनावरहित गरूँ । रामलाई तनावरहित राख्नु मेरो धर्म हो, यो मेरो कर्तव्य हो, यो मेरो जीवनको चिन्तन हो । तब उनले देखे कि राम सीतालाई देखेर किंचित् मुस्कुराए, सीताको ललाटमा सिन्दूरको रेखा थियो, सौभाग्यको रेखा थियो । 'आज तिम्रो सिन्दूरको रेखा, सौभाग्यको रेखा बडो सुन्दर किसिमले चम्किरहेको छ'– रामले भने । सीताले भनिन्– 'हजूर हुनुहुन्छ यो त मेरो सौभाग्यको प्रतीक हो ।' यस वार्तालापमा शायद एक सेकेन्ड बितेको होला, राम मुस्कुराएका होलान् र सीतातर्फ हेरेका होलान् । हनुमान्‌ले सोचे कि आज पहिलो दिन, पाँच दिनपछि एउटा सानो मुस्कुराहट आएको छ राममा । तर मैले कुनै पनि प्रकारले यसलाई स्थायित्व दिनुछ । राम त बडो हँसमुख हुनुहुन्थ्यो, हास्यप्रिय हुनुहुन्थ्यो, विनोदप्रिय हुनुहुन्थ्यो र उहाँ उदास रहनुभयो भने मेरो जीवन आफैमा व्यर्थ हुनेछ किनकि मैले आफ्नो जीवन उहाँलाई समर्पित गरिदिएको छु ।

हनुमान्‌ले सोचे कि आज राम क्षणिक मुस्कुराउनुभयो, भोलिपल्ट हनुमान्‌ले आफ्नो शरीरमा पूरै सिन्दूर घसे किनकि हनुमान्‌ले सोचे कि सिन्दूरलाई देखेर राम धेरै खुशी हुनुहुन्छ । सिउँदोमा अलिकति सिन्दूर देखेर राम मुस्कुराउनुभयो भने किन म आफ्नो

शरीरभरि सिन्दूर घसेर रामअघिल्तिर नजाऊँ ? उनी त्यसैगरी रामको अघि उभिए । राम जोर-जोरले हाँस्न लागे । उनले सोधे– तिमीले आज यो के गरेको ? उनले भने– महाराज, हजूर जुन कुराले खुशी हुनुहुन्छ त्यही म गरूँ । जसरी पनि हजूर खुशी हुनुहोस्, सिन्दूर घस्नु मेरो लागि कुनै ठूलो कुरा थिएन । हजूर सिन्दूर देखेर खुशी हुनुभयो त्यसैले पूरा शरीरमा सिन्दूर दलेर नै हजूरको अगाडि उभिरहने छु । त्यस दिनदेखि हनुमान्लाई सिन्दूर दलिदिन थालियो । त्यसभन्दा अगाडि हनुमान्लाई सिन्दूर लगाइदिने गरिन्नथ्यो । आज तपाईं हामीले उनलाई सिन्दूर लगाइदिन्छौं तर त्यो त उनको क्रिया थियो । उनको मानसमा केवल यही थियो कि जो मेरा स्वामी हुनुहुन्छ, गुरु हुनुहुन्छ उहाँ प्रसन्न हुनुहोस् । त्यसका लागि चाहे मलाई जे पनि गर्न किन नपरोस् । करीब-करीब यसप्रकारको भावनालाई लिएर मकरध्वजले गीता लेखे र गीतामा यो श्लोक राखे–

**जीवनं सदैवं महित्वं प्रणत्वां पूर्णभ्वान,**

**पूर्णमदैव तुल्यं पशुत्वं चैवं नरादध्यं सहिष्णौ गुरु पूर्णमदैवं तुल्यं ।**

अष्टावक्रले भने कि– जनक तिमी योद्धा, राजा त हौ, तर गएगुज्रेका राजा हौ । हिम्मतका साथ बोल्न त त्यसले सक्दछ जसको हृदयमा आत्मज्ञान हुन्छ, तागत हुन्छ । यसैले गएगुज्रेका हौ कि तिमीमा त्यो चेतना आउन पाएको छैन, त्यो उच्चको टिको ज्ञान आउन पाएको छैन । यसैले तिम्रो जीवनमा वितृष्णा रहेको छ, पुत्र प्राप्ति भएको छैन, यसैले तिमी वितृष्णाबाट आफैमा कुण्ठित भयौ र त्यो कुण्ठाले कहिलेकाहीँ तिमीभित्र हलचल ल्याउँदा तिमी कसैलाई पीडा दिएर खुशी हुन्छौ । जब कोही तिम्रा शब्दका घाउले, कुराले पीडित हुन्छ तब तिम्रो मनमा प्रसन्नता प्राप्त हुन्छ कि मैले यसलाई पीडा दिएँ । त्यो पीडा त तिम्रो आफ्नै थियो । तिम्रो जीवनमा कमी थियो, एउटा न्यूनता थियो र त्यस न्यूनतालाई नष्ट गर्न दोस्रो सहारा लिएका थियौ । उनले भने– यसैले जनक तिमी महान् भनिन लायक छैनौ । तिमी राजा हुँदैमा पनि महान् कहलिन सक्दैनौ । तिमी त्यतिबेला महान् कहलिन सक्छौ जब तिमी सही अर्थमा शिष्य बन्न सक्छौ । यसपछि मात्र तिमीले मेरो जीवनको उद्देश्य शिष्य बन्नु हो, महान् बन्नु हो, उच्चको टिको बन्नु हो भन्ने बुझ्न सक्छौ । तिमीले पूरा आत्मालाई, पूरा चित्तलाई, पूरा मनलाई आफैमा परिवर्तन गर्नुपर्दछ । धोती लाएर, कुर्ता लाएर परिवर्तन आउँदैन । भित्रैबाटै तिमी परिवर्तित हुनुपर्दछ र भित्रैबाट परिवर्तन त्यसकारण आउँदैन कि तिमीभित्र एउटा गर्व छ, तिमीभित्र कुण्ठा छ, यी दुवैले तिमीलाई आफैमा तल झारिरहेका छन् । तिमीले चाहे ती ऋषिहरूको सत्संग गर, चाहे तिमीसँग बीसहजार शिष्य बसेका छन्, ऋषि बसेका छन्, गुरु

बसेका छन्, उनीहरूको सत्संग गर । यस सत्संगबाट तिमीलाई केही हुने छैन, यिनीहरूको प्रवचनबाट तिमीलाई केही फाइदा हुने छैन जबसम्म तिमीले आफ्नो आत्मामा नियालेर यी दुवैलाई निकाल्दैनौ । यिनलाई निकाल्नलाई तिमीले मनमा एउटा चिन्तन गर्नुपर्दछ, विचार गर्नुपर्दछ कि तलकै लोकमा रहने वा केही बन्ने । केही बन्नुछ जुन तिम्रो जीवनको एउटा श्रेष्ठता हो, अद्वितीयता हो । तब तिमीले आफैमा पूर्णरूपमा यी दुवै तथ्यलाई, कुण्ठा र तनावलाई र तिम्रा जीवनका न्यूनताहरूलाई पूर्णरूपमा निकाल्नुपर्दछ ।

यदि तपाईं आत्मामा डुब्नुभएको छ, गुरुको ध्यानमा हनुमान्जस्तै डुब्नुभएको छ भने तपाईं आफैमा परमशिष्य हुनुहुन्छ । यसका लागि कुनै तराजु छैन, कुनै मापदण्ड पनि छैन । तपाईं मनबाट नभई शरीरबाट समर्पित हुनेबित्तिकै गुरुलाई थाहा हुनेछ कि यो शरीरबाट समर्पित छ । तपाईंले 'गुरु-गुरु' भनिरहनुभएको छ, मलाई हात जोडिरहनुभएको छ, मलाई केवल प्रणाम गरिरहनुभएको छ । त्यस प्रणामबाट त्यस प्रकारका गुरु खुशी हुन्छन् जो गुरु होइनन् । तर जो सही अर्थमा गुरु हुन्छ उनले हेर्नेछ, चिन्तन गर्नेछ कि नाटक गरिरहेको छ वा सही अर्थमा समर्पित भइरहेको छ । यदि नाटक हो भने गुरुलाई पनि नाटक गर्न आउँछ, नाटकीय आशीर्वाद दिन आउँछ । तर यो जोडिने क्रिया होइन ।

अष्टावक्रले भनेका छन् कि 'जनक, तिमी गुरुसँग जोडिन सक्दैनौ किनकि तिम्रो जीवनमा गुरु हुनुहुन्न । तिम्रो जीवनमा त तलब खाने साधु-सन्त, ऋषि छन् । जो तलब लिएर जीवनयापन गर्दछ त्यो ब्राह्मण हो र जो तलबमा काम गर्दछ त्यो नोकर कहलिन्छ ।

त्यो शिष्य कहलिन सक्दैन ।' त्यो कसरी शिष्य कहलिन्छ ? एकजना नोकरलाई पैसा दिँदा, रोटी दिँदा उसले तिम्रो गुणगान गाउँछ, तिम्रो नराम्रो उसले कसरी गर्छ ? जसले तिम्रो अहित गर्छ उसलाई त तिमी हटाइहाल्छौ ।

गुरु धारण गर र आफैसँग भएका कुण्ठा र तनावलाई समाप्त गर । जुन दिन तिमीले यसो गर्न सक्छौ सोही दिन तिमी सही अर्थमा शिष्य बन्न सक्छौ किनकि शिष्य र गुरुमा केवल दुई विकार हुन्छन्, तेस्रो विकार हुनै सक्दैन । त्यो विकार चाहे घरबाट आएको होस्, चाहे बाहिरबाट आएको होस् । त्यो विकार आयो र त्यस विकारबाट मानिस अधम बनिरहन्छ । दुई सय वर्षमा, पाँच सय वर्षमा, पाँच हजार वर्षसम्म पनि यो विकार सजिलै पग्लिदैन । एक क्षण पग्लिएमा पनि फेरि पुन: त्यस्तै हुन्छ । जबसम्म स्थायीरूपमा पग्लँदैन तबसम्म तिमी समर्पित हुन सक्दैनौ । यदि आफैमा समर्पित शिष्य बन्न सकिन्न भने फेरि शिष्य भन्ने हक पनि छैन । फेरि शिष्य बन्न सकिन्न ।

त्यसैले अष्टावक्र भनिरहेका छन् कि जीवनको उद्देश्य उच्च हुनु हो । उच्च भइरहेको छ कि तल झरिरहेको छ ? जहाँ थियो त्यहीं स्थित छौ भने त्यो त एउटा सामान्य पुरुष भयो । यदि तल झरिरहेका छौ भने तिमी अधम भयौ जसको कुनै गणना छैन । यदि तिमीमा तलबाट उठ्ने क्रिया छ, निरन्तर आफैलाई पगाल्ने क्रिया छ भने यो हेर्नुपर्ने क्रिया हो कि तिमी कति मधुरतासँग, कति भित्री हृदयदेखि आफ्ना गुरुभाइहरू र गुरुसँग जोडिएका छौ । असत्यले तलतिर नै झार्दछ ।

जनक, आफैलाई बुझ्नू तिम्रो यो धर्म हो, तिम्रो कर्तव्य हो । तिमीले बुझ्न सक्दछौ कि तिमी कहाँ छौ । तिमीमा भएको अहं कुन प्रकारको हो ? तिमीसँग छ नै के ? यी राजपाट त रावणसँग पनि थिए र त्यो तिम्रो भन्दा उच्च थियो । तिमी आफ्नै राजपाटको प्रशंसा गर्दैछौ । तिमीसँग केही रानीहरू छन्, कृष्णसँग त सोह्र हजार रानी थिए र तिमी यति थोरै रानीमाथि पनि गर्व गरिरहेका छौ । तिमीले भन्दा धेरै हीरापन्नाबाट रावणले सुनको लङ्का बनाएका थिए, पत्थरसम्म पनि सुनको बनाएका थिए, घर मात्र होइन, पूरा लङ्का सुनको बनाएका थिए । तिमी कहाँ उभिएका छौ, के छ तिमीसँग ? तिमी मभन्दा पनि अधम छौ, तिमी अधमभन्दा पनि अधम छौ, त्यस सिंहासनमा बस्ने तिमी अधिकारी छैनौ, गएगुज्रेका छौ । यो सुनेर जनकलाई ठूलो झट्का लाग्यो । उनले पहिलोपटक देखे कि एउटा तेजस्वी आँखाले स्पष्ट भनिरहेको छ जबकि बीसहजार पण्डित साथमा छन्, तिनले भन्ने हिम्मत गरेका थिएनन् । अष्टावक्रले भने कि म तिम्रो तलबमा बाँचेको छैन, म यसप्रकार तिम्रो गुरु पनि बन्न चाहिरहेको छैन । म त यस सभामा केवल यसैले आएको हुँ कि तिमी अत्यन्तै गएगुज्रेका मानिस छौ र यो बताउन आएको हुँ । तिम्रो आँखा खोल्न आएको हुँ कि तिमी सार्की हौ, तिमी मेरो छालालाई देखेर आफै हाँसिरहेका छौ, मुस्कुराइरहेका छौ किनकि म आठ ठाउँमा बाङ्गिएको छु । यो मेरो छाला टेढो हो, म होइन, मेरो ज्ञान बाङ्गो छैन । तिमीले मेरो ज्ञानबाट गुरुत्व प्राप्त गर्नुपर्दछ र जबसम्म तिमीमा यो अहं, यो छल र यो कुण्ठा यी तीन तत्त्व छन् भने यसले शिष्यलाई तल झार्न सक्दछ ।

जनक, यदि तिमीले माथि उठ्ने हो भने यी तीनै तत्त्वलाई हटाउनै पर्दछ, प्रेममा जोडिनुपर्नेछ । एक अर्कोसँग समर्पित हुनुपर्दछ र सबैभन्दा महत्त्वपूर्ण त तिमीले गुरुमा समर्पित हुनुपर्दछ । अष्टावक्र हिँड्ने बेलामा राजा जनक उठे । पहिलोपटक आफ्नो मनबाट कुण्ठा, छल र झूटलाई पगाले । पग्लनेबित्तिकै पूरा अनुहार र दाह्री आँसुले भिजे र सेनापति, मन्त्री र ती बीसहजार ब्राह्मण तथा भरिएको सभासामु उनी साष्टाङ्ग चरणमा झुकेर हिक्कहिक्क गर्न लागे । अष्टावक्रले उनलाई उठाएर भने– आज पहिलोपटक म तिमीलाई मनुष्य देखिरहेको छु । पहिलोपटक देखिरहेको छु कि तिमीले सही बाटोमा दुई-चार पाइला चालेका छौ । अब यी घुम्तीहरूलाई तिमीले समातिराख्यौ भने निश्चितरूपमा नै आउने पिँढीलाई तिम्रो याद रहनेछ तर यसलाई समातिरहन सकनौ भने समय र कालले मानिसलाई मेटेजस्तै तिमी पनि मेटिनेछौ । तिम्रो जीवनको प्रत्येक क्षण यही क्षण थियो । तिमीले म राजा हुँ र एउटा सानो मानिसको अगाडि म किन झुकूँ भनेर गर्व गरिरहेको भए तिमी वास्तवमा नै मेटिने थियौ किनकि तिम्रो अहंले तिमीलाई समाप्त गर्ने थियो, तिम्रो अनुहारमा चाउरी पर्ने थियो र बिरामी, असत्य, असहाय, अपाङ्ग भएर तिमी मृत्युलाई प्राप्त हुन्थ्यौ । तिमीलाई जनक भनिने थिएन, विदेह मानिने थिएन, ऋषि जनक भनिने थिएन, एउटा राजा अवश्यै भनिने थियो र यस्ता राजा तिमीभन्दा पहिले पचासहजार भइसकेका थिए । यो महत्त्वपूर्ण कुरा होइन, तिमीपछि पनि पचारहजार राजा हुनेछन् । त्यसपछि अष्टावक्रले भने– आजबाट म तिमीलाई जनक भन्दिन, विदेह भनेर बो लाउँछु । विदेह बनेर जीवित रहने क्रियाका लागि धन्यवाद ।

जहाँ वासना छ, जहाँ छल छ, जहाँ झूट छ, जहाँ कपट, जहाँ असत्य छ, यी सबै कुराहरूबाट हटेर चित्तवृत्तिहरूमा अंकुश लागेर तपाईंको मनमा श्रद्धा, प्रेम, समर्पणको भाव उदय हुन सक्यो भने बुझ्नुहोस् तपाईंको जीवन ऊर्ध्वगतिमा गइरहको छ । तपाईंको हर स्थितिमा म तपाईंको साथ छु र तपाईंको जीवनको अन्धकारलाई मेटेर प्रकाशवान् बनाउनका लागि तत्पर छु, तपाईं हात बढाउनुहोस् ।

**– सद्‌गुरुदेव परमहंस स्वामी**
**श्री निखिलेश्वरानन्द महाराज**

**परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथका लीलाहरूको वर्णन गरी तयार पारिएको श्री गोरख महापुराणलाई शृङ्खलाबद्धरूपमा प्रकाशित गर्दै लगिएको छ। यसबाट परमपूज्य सद्‌गुरुदेवको बारेमा जान्न, बुझ्न खोज्ने सम्पूर्ण पाठकहरू लाभान्वित हुनुहुनेछ भन्नेमा हामी विश्वस्त छौँ। यस महापुराणलाई संकलन एवं अनुवाद गरी प्रस्तुत गरिएको हो। यससम्बन्धी सम्पूर्ण कुराहरूको जिम्मेवारी संकलक एवं अनुवादक (विष्णु खनाल,गोर्खा) स्वयंको नै हुनेछ।**

# श्री गोरख महापुराण

**त्रिपन्नौँ भाग**

दत्तात्रेय भगवान् महाराज यदुसँग भन्नुहुन्छ– राजन्, मनुष्यलाई जुन जुन वस्तु अति प्रिय लाग्दछ, ऊ त्यसको संग्रह गरेर ठूलो दुःख उठाउँदछ। बुद्धिमान् मनुष्य यस कुरालाई बुझेर अकिंचन भावबाट रहन्छ। शरीरको त के कुरा, मनबाट पनि ऊ कुनै वस्तुको संग्रह गर्दैन। तब उसलाई सुखस्वरूप परमात्माको प्राप्ति हुन्छ। एउटा बाजले आफ्नो चुच्चोमा मासुको टुक्रा लिएको थियो। त्यसै समय अर्को बलवान् बाज, जोसँग केही पनि खाने कुरा थिएन, ले घेरेर मासु खोस्नको लागि आफ्नो चुच्चोले उसलाई ठुँगेर घाइते बनाउन लाग्यो। तब त्यस बाजले आफ्नो चुच्चोमा लिएको मासुको टुक्रा टाढा फ्याँकिदियो तब उसलाई सुख प्राप्त भयो र दुःखबाट मुक्ति मिल्यो। राजन ! म मान-अपमानमा ध्यान दिन्न। घर, गृहस्थीहरूलाई जुन चिन्ता हुन्छ, त्यो मलाई रत्तीभर पनि छैन। म आफ्नो आत्मामा नै रमेर आफैसँग सधैँ क्रीडा गर्दछु यो शिक्षा मैले बालकसँग सिकेको हुँ। म पनि उसैको समान मोज मस्तीमा रहन्छु। यस जगत्‌मा दुई प्रकारका मानिस नै निश्चिन्त भएर मनमग्न भएर परमात्मामा लीन रहन्छन्। एक त भोलाभाला निश्चेष्ट साना शिशु, दोस्रो ती मानव जो गुणातीत भएका छन्। एकपटक एक कन्याको घरमा उनलाई वरण गर्नको लागि वर पक्षका मानिस आएका थिए। त्यसबेला उनको परिवारका मानिसहरू बाहिर गएका थिए। यसकारण ती कन्याले आफैले ती मानिसहरूको आतिथ्य सत्कार गर्ने विचार गरिन्।

उनले भोजन गराउनको लागि घरको भित्र एकान्तमा पुगेर धान कुट्न लागिन्। धान कुट्दा ती कन्याको नाडीमा लगाएको चुरा जोडले बज्न लाग्यो। चुरा बज्नाको कारण उनलाई मनमा बडो लज्जा भयो। उनले आफ्नो हातको चुरा दुई-दुईवटा मात्र राखेर बाँकी सबै फोडिन् र धान कुट्न शुरु गरिन् तर ती दुई चुरा पनि आपसमा ठोकिएर बज्न लागे। तब उनले अरू एउटा चुरा पनि फोडिन्। अब कन्याको नाडीमा केवल एउटा चुरा मात्र रहन गयो। तब चुराको झंकार बन्द भयो।

हे रिपुमर्दन राजा ! त्यसबेला मानिसहरूको आचार-विचारको परख (परीक्षा) गर्दै घुम्दै फिर्दै म पनि त्यतै पुगें । तब मैले त्यस कन्याको चरित्रबाट यो शिक्षा ग्रहण गरें कि जहाँ धेरै मानिस एकसाथ रहन्छन् तब धेरै कुरा, गफ र लडाईं-झगडाजस्ता कुराहरू हुन्छन् । यसकारण जनसमुहमा रहेर प्रभु चिन्तन र मननमा बाधा परेमा तत्त्व चिन्तक साधक एक्लै नै विचरण गर्नु उचित छ ।

**चौवन्नौँ भाग**

राजन् ! मैले वाण बनाउनेबाट यो शिक्षा ग्रहण गरेको छु कि आसन र सासलाई जितेर वैराग र अभ्यासद्वारा आफ्नो मनलाई वशमा गर्नू । जब उसलाई परमानन्द परमात्म स्वरूपको ज्ञान हुन जन्छ तब उसले बिस्तारै कर्मवासनाहरूको धूलोबाट मुक्ति पाउँछ । चित्त स्थिरताको एक मात्र साधन आत्मज्ञान नै हो । जसको चित्त आत्मामा नै स्थिर हुन जान्छ त्यसका त्रिगुणात्मक कर्मवासनाहरू समाप्त हुन जान्छन् । राजन् ! एउटा शिक्षा मैले सर्पबाट पनि सिकेको छु कि संन्यासी पनि एक ठाउँमा रहनु हुँदैन र प्रमादबाट बच्नुपर्छ । ऊ बाहिरी आचारहरूद्वारा नचिनियोस् । यसको लागि कसैको सहायता नलिनु र धेरै कम बोल्नू । यस अनित्य शरीरको लागि घर बनाउने झन्झटमा पर्नु संन्यासीको लागि व्यर्थको टाउको दुःखाइ हो । सर्वव्यापक अन्तर्यामी सर्वशक्तिमान् भगवान्ले प्रथम कल्पमा नै बिना कसैको सहायताले आफ्नो मायाद्वारा रचेको यस जगत्लाई कल्पको अन्तमा (प्रलयकाल आएपछि) काल शक्तिद्वारा नष्ट गरिदिनुभयो, आफूमा लीन गराउनुभयो र सजातीय विजातीय तथा स्वगत भेदबाट शून्य एक्लै आफू मात्र बाँकी रहनुभयो । जसरी माकुरोले आफ्नो मुखबाट जालो फैलाउँछ र मन मग्न भएर उसैमा विहार गर्दछ र फेरि त्यस जाललाई आफै नै निल्दछ, त्यसरी नै ईश्वरले पनि जगत्लाई आफूबाट उत्पन्न गर्दछ, फेरि विहार गर्दै यसलाई आफैमा नै लीन गराउँछ । जसरी शिवजी महाराजको डमरु बज्दछ र भगवान् श्रीकृष्णको बाँसुरी र यिनै वाद्यहरूको आवाजमा जगत् बाँदरजस्तै नाच्दछ । कोही भन्छन्– म धनवान् हुँ, कोही भन्छन्– म बलवान् हुँ । यस जगत्मा मतवाला मानिस आ-आफ्नो नाच नाचेर एकदिन कालको मुखमा समावेश हुन्छ । यही त्यस नटनागर प्रभुको लीला हो । राजन् ! एउटा शिक्षा मैले कीराबाट पनि ग्रहण गरे को छु । यदि अधिक स्नेहबाट, द्वेषबाट अथवा भयबाट जानी बुझीकन, एकाग्र रूपबाट आफ्नो मन कुनै वस्तुमा लगाउँदा उसलाई त्यसै वस्तुको स्वरूप अवश्य प्राप्त हुन जान्छ । जसरी भृङ्गी एउटा कीरालाई समातेर पर्खालमा आफू बस्ने ठाउँमा बन्द गरिदिन्छ र त्यो कीरा भयको कारण त्यसैको चिन्तन गर्दागर्दै आफ्नो पहिलो शरीरको त्याग नगरीकन नै त्यसै शरीरमा तद्रूप हुन जान्छ । राजन् ! यसैप्रकार मैले आफ्ना चौबीस गुरुहरूबाट यस्ता शिक्षाहरू सिकेको छु र आफ्नो शरीरबाट जुन कुरा मैले सिकेको छु, त्यसलाई पनि ध्यानपूर्वक सुन । हामीलाई हाम्रो यो शरीरले पनि वैराग्य र विवेकको शिक्षा दिन्छ । मर्नु, जिउनु र उत्पन्न हुनु त शरीरको धर्म हो । जसरी वृक्षमा कोपिला लाग्दछ र रङ्गी-विरङ्गी सुन्दर सुन्दर फूल, फल, हरिया पातहरूका बीच फुलेर केही कालपछि रूखमा नै मुर्झाएर सुकेर झर्दछ र प्रकृतिको कर्मानुसार दोस्रोपटक फेरि नयाँ फूल, फल, पात निस्केर रूखको शोभा बढाउँदछ, यसरी नै शरीरलाई पनि समातिरहँदाको फल यो हुन्छ कि जबसम्म जिउनु छ, दुःखमाथि दुःख भोग्नुछ । जसरी धेरै सौताहरू आफ्नो प्यारो पतिलाई आ-आफ्नो तर्फ खिच्दछन्, त्यसैगरी कर्मेन्द्रिय र ज्ञानेन्द्रियहरू पनि जीवात्मालाई आ-आफूतिर सदा खिच्ने गर्दछन् ।

राजन् ! परमपिता परमात्माले आफ्नो मायाद्वारा आफ्नो शक्तिबाट अनेक प्रकारका जीवजन्तु, पशुपक्षी, कीरा फट्यांग्रा आदि योनिहरूको रचना गर्नुंभएको हो । तर यतिबाट जब जगत्पितालाई सन्तोष भएन तब उहाँले मनुष्य शरीरको रचना गर्नुभयो, मानवको रचना गरेर प्रभु बडो प्रसन्न हुनुभयो । यद्यपि यो मनुष्य शरीर पनि छ त अनित्य नै । मृत्यु यसको पछाडि लागेको पनि छ । तर यस शरीरद्वारा परम पुरुषार्थको प्राप्ति हुन सक्छ जबकि अनेकौं जन्मपछि प्रभु कृपाबाट यो दुर्लभ मानव शरीर पाएर बुद्धिमान् पुरुषले मृत्यु आउनुभन्दा अगाडि नै मोक्ष प्राप्तिको प्रयत्न रातदिन एक गरेर गर्नुपर्दछ । मनुष्य जीवनको मुख्य उद्देश्य मोक्ष प्राप्ति नै हो । विषय भोग त सबै योनिहरूमा मिल्दछ । यसकारण पशुहरूजस्तै मनुष्यले आफ्नो जीवन व्यर्थको संग्रहमा बिताउनु हुँदैन । एक मात्र गुरु ज्ञानबाट पनि सुदृढ बोध हुँदैन त्यसको लागि बारम्बार गुरुको उपदेशलाई मनन गरेर निदिध्यासन गर्नु नित्य आवश्यक छ । यसप्रकार दत्तात्रेय भगवान्को उपदेश मनन गरेर निदिध्यासन गरेर महाराज यदु पनि समस्त आसक्तिलाई त्यागेर सांसारिक प्रपंचबाट छुटकारा पाएर मुक्त भए । जो पाठकगण मुक्तिको चाहना राख्दछन्, तिनले दत्तात्रेय अवधूतजस्ता योगी गुरु खोजेर ठूला-साना सद्ग्रन्थहरूको मनन नित्य गर्नू ।

हरि ॐ तत्सत् ।

# आफ्नो हात आफै हेरौँ

**ग्रहहरूको क्षेत्र :**

हस्तरेखा विज्ञानले भन्दछ कि हातमा समस्त ग्रहको स्थान निर्धारित छ र सूक्ष्म दृष्टिले हेर्दा यी ग्रहहरूलाई चिन्न सकिन्छ ।

१. **बृहस्पति** : हातमा यसको स्थान चोरी औँलाको मूलमा तथा मङ्गल पर्वतमाथि हुन्छ । यो स्वभावैले अधिकार, नेतृत्व, संचालन तथा लेखनको देवता विशेषमा मानिन्छ। गुरु पर्वतले यस तथ्यलाई राम्रोसँग स्पष्ट गर्दछ ।

जुन हातमा गुरु पर्वत सबैभन्दा अधिक उठेको र स्पष्ट हुन्छ त्यसमा देवतुल्य सबै गुण पाइन्छन् । यस्तो व्यक्ति स्वयंले पनि उन्नति गर्दछ र अरूलाई पनि उन्नति गराउनमा सहायक हुन्छ । यस्तो व्यक्ति न्यायप्रिय, आफ्नो वचनलाई निर्वाह गर्ने, परोपकारी तथा समाजमा माननीय हुन्छ । कठिनभन्दा कठिन परिस्थितिहरूमा पनि यस्तो व्यक्ति सहसा विचलित हुँदैन । उच्च न्यायाधीश वा उच्च पदाधिकारीहरूमा निश्चय नै गुरु पर्वत विकसित अवस्थामा रहेको हुन्छ । यस्ता व्यक्तिहरूमा जनतालाई आफ्नो विचारअनुकूल बनाउने विशेष क्षमता हुन्छ । यिनीहरूमा धार्मिक भावना आवश्यकताभन्दा बढी पाइन्छ ।

यदि गुरु पर्वत अल्पविकसित वा अविकसित हुन्छ भने उपर्युक्त गुणको न्यूनता बुझ्नुपर्दछ। शारीरिक दृष्टिबाट यस्तो व्यक्ति साधारण जीउडाल भएको स्वस्थ तथा हँसमुख हुन्छ । वाचन तथा भाषण कलामा यस्तो व्यक्ति पटु हुन्छ तथा हृदयबाटै यस्तो व्यक्ति दयालु तथा परोपकारी मानिन्छ । आर्थिक पक्षको अपेक्षा सम्मान तथा यश प्राप्तितर्फ यस्तो व्यक्तिको झुकाव केही अधिक नै हुन्छ । स्वतन्त्रता र नेतृत्व-गुण यस्तो व्यक्तिमा विशेषरूपमा पाइन्छ ।

विपरीत लिङ्गप्रति यस्तो व्यक्तिको मनमा कोमल भावना हुन्छ, सुन्दर तथा सभ्य स्त्रीहरूसँग यस्तो व्यक्तिको सुमधुर सम्बन्ध रहन्छ । यदि स्त्रीहरूको हातमा यस्तो पर्वत विकसित अवस्थामा हुन्छ भने यिनीहरूमा समर्पणको भावना विशेषरूपमा पाइन्छ ।

यदि गुरु पर्वतको झुकाव शनितर्फ छ भने यस्तो व्यक्ति चिन्तनशील तथा आफ्नै कार्यहरूमा लागिरहने हुन्छ तर जीवनमा पूर्ण सफलता नमिल्नाले बिस्तारै-बिस्तारै उसमा निराशाको भावना आउन लाग्दछ। स्वभावले यस्तो व्यक्ति गम्भीर प्रकृतिको हुन्छ । यदि गुरु पर्वत तलतर्फ झरेको छ भने व्यक्तिले जीवनमा कैयौँपटक बदनामीको सामना गर्नुपर्दछ । साहित्यिक क्षेत्रमा यस्तो व्यक्ति पूर्ण सफल भएको देखिन्छ ।

यदि गुरु पर्वत आवश्यकताभन्दा धेरै विकसित छ भने यस्तो व्यक्ति स्वार्थी, घमण्डी तथा स्वेच्छाचारी हुन्छ ।

जसको हातमा गुरु पर्वतको अभाव हुन्छ उसको जीवनमा आत्मसम्मानको कमी रहन्छ । आमाबुबाको सुख यस्तो व्यक्तिलाई अत्यन्तै कम प्राप्त हुन्छ तथा त्यो निम्न विचारले सम्पन्न हल्का स्तरका साथीहरूसँग सम्बन्धित रहन्छ ।

यदि यस पर्वतको उभार सामान्यत: ठीक छ भने व्यक्तिमा अगाडि बढ्ने भावना हुन्छ र यस्तो व्यक्तिको विवाह चाँडै हुन्छ र यस्तो व्यक्तिको गृहस्थ जीवन सामान्यता सुखमय रहन्छ ।

यदि औँलाहरू तीखा छन् भने र गुरु पर्वत विकसित छ भने त्यो व्यक्ति अन्धविश्वासी हुन्छ । यसप्रकार वर्गाकार औँलाहरूका साथमा विकसित गुरु पर्वत छ भने त्यो एक प्रकारले जीवनमा निरंकुश एवं अत्याचारी बन्छ । यदि औँला अत्यन्तै लामो छ भने र यस पर्वतको विकास ठीक प्रकारले भएको छ भने त्यो व्यक्ति अपव्ययी तथा भोगी हुन्छ। यदि गुरु तथा शनि पर्वत बराबर उठेको छ भने अथवा एक आपसमा मिल्न गएको छ भने त्यो व्यक्ति प्रबल भाग्यशाली हुन्छ तथा जीवनमा विशेष सफलता प्राप्त गर्दछ ।

वस्तुत: गुरु पर्वत जीवनमा अत्यधिक सहायक तथा उन्नतितर्फ अग्रसर गराउने पर्वत मानिन्छ ।

२. **शनि** : यसको आधार माझी औँलाको मूलमा हुन्छ। हातमा यस पर्वतको विकास असाधारण प्रवृत्तिहरूको सूचक मानिन्छ । यदि हातमा यस पर्वतको अभाव छ भने व्यक्तिले जीवनमा विशेष सफलता वा सम्मान प्राप्त गर्दैन ।

माझी औँलालाई 'भाग्यकी देवी' भनिन्छ किनकि भाग्य रेखा वा 'फेट लाइन'को समाप्ति यसै औँलाको मूलमा हुन्छ । यदि शनि ग्रह पूर्ण विकसित छ भने व्यक्ति प्रबल भाग्यमानी हुन्छ तथा जीवनमा आफ्नै प्रयत्नले अत्यन्तै माथि उठ्दछ । विकसित पर्वत हुने भएकोले यस्तो व्यक्ति एकान्तप्रिय तथा निरन्तर आफ्नो लक्ष्यतर्फ अघि बढ्ने हुन्छ । त्यो आफ्नो कार्यमा अथवा लक्ष्यमा यति धेरै डुब्दछ कि उसले घर-गृहस्थको चिन्ता नै गर्दैन । स्वभावले यस्तो व्यक्ति चिड्चिडे तथा शङ्कालु प्रवृत्तिको हुन्छ । जति-जति उमेर बढ्दै जान्छ त्यति-त्यति व्यक्ति पनि रहस्यवादी हुन्छ । शनि पर्वत प्रधान व्यक्ति जादूगर, इन्जिनियर, वैज्ञानिक, साहित्यकार अथवा रसायनशास्त्री हुन्छ । यस्तो व्यक्ति आफ्नो जीवनमा पूर्ण मितव्ययी हुन्छ तथा अचल सम्पत्तिमा धेरै विश्वास राख्दछ । गीत, नृत्य आदि कार्यहरूमा यस्तो व्यक्तिको रुचि कम हुन्छ । शंकालु प्रवृत्ति यस्तो व्यक्तिको जीवनमा बालककालदेखि नै हुन्छ र आफ्नी पत्नी तथा पुत्रमाथि पनि शङ्का गर्न हिचकिचाउँदैन ।

यदि यो पर्वत अत्यधिक विकसित हुन्छ भने व्यक्तिले जीवनमा आत्महत्या गर्दछ । डाँका, ठग, लुटेरा आदिको हातमा यो पर्वत आवश्यकताभन्दा धेरै विकसित हुन्छ । यस्ता व्यक्तिहरूमा पाइने पर्वतले साधारणतः पहेँलोपना लिएको हुन्छ । यस्ता व्यक्तिहरूको हात तथा छाला पहेँलो हुन्छ तथा यिनीहरूको स्वभावमा चिड्चिडाहट स्पष्टरूपमा देख्न सकिन्छ ।

यदि शनि पर्वत गुरु पर्वततर्फ झुकेको छ भने यसलाई शुभ संकेत मान्नुपर्दछ । यस्तो व्यक्तिले समाजमा आदरणीय स्थान प्राप्त गर्दछ तथा समाजमा श्रेष्ठ रूपमा देखिन्छ । तर यदि शनि पर्वतको झुकाव सूर्यतर्फ हुन्छ भने यस्तो व्यक्ति अल्छी, निर्धन तथा भाग्यको भरोसामा जीवित रहने हुन्छ । यस्तो व्यक्तिमा आवश्यकताभन्दा धेरै निराशा हुन्छ तथा यस्तो व्यक्ति प्रत्येक कार्यमा अन्धकार पक्ष नै देख्दछ । परिवारबाट यस्तो व्यक्तिलाई विशेष लाभ प्राप्त हुँदैन, व्यापारमा यस्तो व्यक्तिले हानी उठाउँछ ।

यदि शनि पर्वतमा आवश्यकताभन्दा धेरै रेखाहरू छन् भने व्यक्ति काँतर तथा अत्यधिक भोगी हुन्छ । यदि शनि पर्वत तथा बुध पर्वत दुवै विकसित छन् भने त्यो व्यक्ति सफल वैद्य अथवा व्यापारी बन्छ र उसको जीवनमा आर्थिक दृष्टिबाट कुनै प्रकारको पनि कमी रहँदैन ।

यदि हातमा शनि पर्वतको अभाव हुन्छ भने त्यस व्यक्तिको जीवन महत्त्वहीन जस्तै हुन्छ । यदि यो पर्वत सामान्यरूपमा उठेको छ भने व्यक्ति आवश्यकताभन्दा ज्यादा भाग्यमाथि विश्वास गर्ने र आफ्नो कार्यमा असफलता प्राप्त गर्ने हुन्छ । यस्ता व्यक्तिहरूको जीवनमा साथीहरूको सङ्ख्या अत्यन्तै कम हुन्छ । स्वभावले यस्तो व्यक्ति हठी तथा अधार्मिक हुन्छ ।

यदि माझी औँलाको शिर चुच्चो छ तथा शनि पर्वत विकसित छ भने व्यक्ति कल्पनाप्रिय हुन्छ तर यदि औँलाको शिर वर्गाकार छ भने त्यो व्यक्ति कृषि अथवा रसायन क्षेत्रमा विशेष उन्नति गर्दछ । क्रमशः जय गुरुदेव !

# आयुर्वेद चिकित्सामा उपवास

आयुर्वेदमा उपवास बस्नुलाई लंघन क्रिया भनिन्छ । व्रत बस्नुलाई फास्टिङ्ग पनि भनिन्छ जसको अर्थ शरीरलाई कसरी हलुका बनाउने भन्ने बुझिन्छ । आयुर्वेद चिकित्सामा कतिपय रोगहरूमा व्रत बस्ने अर्थात् एक छाक मात्र खाने नियमहरू बताइएको छ । जस्तै जीर्ण ज्वर (Chronic fever) मा बिरामीको पाचन प्रणाली एकदम कमजोर भएको हुन्छ त्यस्तो अवस्थामा कमसेकम एक छाक नखाने वा हलुका सुपाच्य पदार्थ मात्र खाने गरेमा शरीरलाई फाइदा पुग्ने हुन्छ अर्थात् पाचन प्रणालीलाई भार पर्दैन । त्यस्तै अपच (Indigestion), अजीर्ण, अरूची (Dispepsia) जस्ता रोगहरूमा पनि उपवास बस्ने नियम छ ।

एक छाक, ६ घण्टा वा १२ घण्टासम्म आहार नलिने वा पानी मात्र खाएर बस्ने प्रक्रियालाई उपवास भनिन्छ । चिकित्साको दृष्टिकोणले पाचन प्रणालीका रोगहरू विशेष गरेर खानाको भार बढी भएर, पाचक रसहरूको स्राव कम भएर हुने अपच रोगमा, अतिसार (Diarrhoea) भइरहेको अवस्थामा, अग्निमान्धमा, पाचन प्रणाली कमजोर भएमा उपवास बस्ने, हलुका खाद्य पदार्थ खाने वा खाँदै नखाने गरेमा फाइदा पुग्दछ । उपवासको समय सकिसकेपछि पनि हलुका खाना खाएर उपवास तोड्ने गर्नुपर्दछ । अर्को सर्जिकल केसमा जस्तो पेट दु:खेको छ, आन्द्रा गाँठो परेको छ भने त्यस्तो अवस्थामा खाना दिँदा धेरै हानी गर्दछ । एपेन्डिसाइटिस, आन्द्रामा अवरोध (Intestinal obstruction) को अवस्थामा पूर्णरूपमा खाना बन्द गर्नुपर्दछ । उसलाई आवश्यक परेको खाना रक्त नली वा अन्य रक्तनलीको माध्यमबाट दिने गरिन्छ । आयुर्वेदमा त्यसभन्दा पनि विशेष पाचन प्रणालीका रोगहरूमा व्रत बस्नु लाभदायक हुने कुराहरूको उल्लेख छ । फेरि आहार दिँदा पनि पहिले तरल पदार्थ त्यसपछि अर्ध ठोस र ठोस पदार्थ दिएर उपवास तोड्दा पाचन प्रणालीलाई पनि असर पुग्दैन र स्वास्थ्यलाई पनि फाइदा गर्दछ ।

**पाचन प्रणालीलाई आराम दियो भने, खाना नखाइ उपवास बस्यो भने पहिलेका अपच भएर रहेका खानाहरु, फोहोर, विकारहरूलाई पाचक रसहरुले पचाएर निकाल्ने गर्दछ र ती अंगहरुलाई सफा गर्दछ ।**

पहिले खाएको खाना अपच भएर, आन्द्रामा जम्मा भएर बसेको छ भने अपक्व अतिसार हुने गर्दछ र दिसा जाँच गर्दा अपच भएका खानाका भागहरू देखिन्छन् । पाचन प्रणालीलाई आराम दिइयो भने, खाना नखाई उपवास बस्यो भने पहिलेका अपच भएर रहेका खानाहरू, फोहोर विकारहरूलाई पाचक रसले पचाएर निकाल्ने गर्दछ र ती अंगहरूलाई सफा गर्दछ । यसरी व्रत बस्दा पाचन प्रणालीका अंगहरू सफा हुने गर्दछन् ।

व्रत बस्दा आमाशय र आन्द्राको भागमा खानाको अभाव हुन्छ । पुरानो बाँकी रहेको खानालाई पनि पचाउँछ । यदि धेरै समय व्रत बसियो भने आमाशयबाट स्राव हुने पाचक रस हाइड्रोक्लोरिक अम्ल, पेप्सिनोजिन, ग्याष्ट्रिक जुस तथा अन्य इन्जाइमले खाना पचाउन नपाएमा सानो आन्द्रामा आएर काम गर्ने विभिन्न इन्जाइमहरूले त्यहीँ वरिपरिका कोषहरूलाई नाश गर्न थाल्दछ जसले गर्दा अल्सर आदि पनि हुन सक्दछ । त्यसैले व्रत बस्नु सबै का लागि उचित नहुन पनि सक्दछ । जस्तै कुनै मानिसमा पाचक रसहरूको स्राव बढी हुन्छ, तीक्ष्ण अग्नि छ, पेप्टिक अल्सर हुने सम्भावना छ भने त्यस्ताले व्रत बस्दा ती पाचक रसहरू हाइड्रोक्लोरिक एसिडका कारण ग्यास्ट्राइटिस, ग्याष्ट्रिक अल्सर, डिउडेनल अल्सर हुन सक्दछ, दु:खाइ बढ्न सक्दछ ।

हामीले लिएको खाना पाचन प्रणालीबाट शोषण भएपछि शरीरको प्रत्येक कोषिकामा आहार पुग्ने गर्दछ । यदि कोषिकामा शक्ति कमी भएमा

पहिलेको जस्तो क्रियाशीलता कम हुन सक्छ । तर धेरै समयमा उपवास बस्नाले कोषिकामा रहेको लाइसोजोम नामक कोषिकाभित्रको अंगले सेललाई नै नाश गर्न थाल्दछ ।

आध्यात्मिकरूपमा हेर्दा चाडपर्वमा, पूजामा उपवास बस्यो भने आत्मसन्तुष्टि हुन्छ, मैले आज भगवान्‌का लागि खाएको छैन, चोखोनितोमा बसेको छु, मानसिकरूपमा सात्विक भाव र आध्यात्मिक भावको विकास हुन्छ जसले गर्दा मानसिकरूपमा शान्ति हुन्छ र आत्मसन्तुष्टि प्राप्त हुन्छ । मन कम चञ्चल भएपछि रिस, राग, क्रोध हराउने, बोलीमा मधुरता आउने आदि हुन्छ ।

त्यसैगरी वैज्ञानिक दृष्टिबाट हेर्ने हो भने जब पूर्ण मात्रामा खाना सबै कोषहरूले पाउँदैनन् तब ती कोषहरूको कार्यमा शिथिलता आउने गर्दछ । त्यसैगरी उपवास बसेको व्यक्तिको दिमागका कोशिकाहरूमा पनि शिथिलता आउने गर्दछ जसले गर्दा उसलाई रिस, राग, क्रोध चाँडो नआउने, बोली व्यवहारमा कोमलता आउने र आनन्दको अनुभव हुने हुन्छ । सबै सिस्टम शिथिल भएपछि नर्भस सिस्टम, अरूसँग बोल्ने क्रिया सबै शिथिल हुन्छ ।

तर विशेष पर्वहरू जस्तै तीज, एकादशी आदिमा धेरै जसो महिला दिदी-बहिनी तथा भक्तजनले आफ्नो स्वास्थ्यको ख्याल नगरेर अरूले गरेको देखासिकी गरेर, आफ्ना रोगहरूलाई विचारै नगरी उपवास बस्दा, व्रत अगाडि र सकिने बित्तिकै पनि टन्न खाने प्रवृत्तिले गर्दा रोग अझ बढेको पाइन्छ ।

आफ्नो शरीरको अवस्था हेरेर, सके डाक्टरको सल्लाह लिएर उपवास बस्नु राम्रो हुन्छ । उपवास बस्ने अघिल्लो दिनमा टन्न खाएर एक्कासी व्रत बस्दा र व्रत सकिसकेपछि पनि तुरुन्तै धेरै मात्रामा खाने गर्नाले पाचन प्रणालीको कार्यमा गडबडी आउँछ जसले गर्दा पछि पाचन प्रणालीसम्बन्धी रोगहरू बढ्न सक्छ ।

शरीरको वजन कम हुने रोगमा, कुपोषण अर्थात् आहारको कमी भएको रोगमा, आमाशयसम्बन्धी रोग, अम्लपित्त, अल्सर, ग्याष्ट्रिक आदिका रोगमा व्रत बस्नु स्वास्थ्यको लागि हानिकारक हुन्छ अर्थात् झन ग्याष्ट्रिकको समस्या बढ्न सक्दछ । जय गुरुदेव !

*- डा.डि.बि.रोक्का, एसोशियट प्रोफेसर, आयुर्वेद क्याम्पस, कीर्तिपुर । कन्सल्ट्यान्ट फिजिसियन आयुर्वेद अस्पताल, नरदेवी ।*

## मङ्सिर महिनाका चाडपर्व

| | |
|---|---|
| मङ्सिर २ गते | **श्री शिव गोरक्ष हवन** |
| मङ्सिर ३ गते | **तान्त्रोक्त वटुक भैरव हवन** |
| मङ्सिर ४ गते | **तान्त्रोक्त महालक्ष्मी हवन** |
| मङ्सिर ५ गते | **तान्त्रोक्त वगलामुखी हवन,** अष्टमीव्रत, गोरखकाली पूजा |
| मङ्सिर ६ गते | **दिव्य गुरु महोत्सव** |
| मङ्सिर ८ गते | उत्पत्तिका एकादशी व्रत |
| मङ्सिर १० गते | प्रदोष व्रत |
| मङ्सिर ११ गते | बालाचतुर्दशी, शतवीजरोपणं |
| मङ्सिर १७ गते | विवाह पञ्चमी |
| मङ्सिर २१ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| मङ्सिर २४ गते | मोक्षदा एकादशी व्रत |
| मङ्सिर २५ गते | प्रदोष व्रत, ईद-उल-अजाहा (बकरइद) |
| मङ्सिर २७ गते | दत्तात्रय जयन्ती, धान्यपूर्णिमा |

**प्रत्येक बृहस्पतिबार बिहान १०:00 बजे-गुरू पूजन**

**प्रत्येक दिन साँझ ५:00 बजे-आरती**

# बाला चतुर्दशी

नेपाली संस्कृतिमा चन्द्रमानअनुरूप वार्षिक चौबीस पक्षका करीब सबै तिथिहरू कुनै न कुनै पर्व, जात्रा, पूजा, साधना गर्ने दिन हुन्छन् । घरहरूभन्दा मन्दिरहरूको बाहुल्यता रहेको उपत्यकामा औँशी, पूर्णिमा, अष्टमी, चतुर्दशी तान्त्रिक पूजा, साधनाका तिथिहरू मानिन्छन् । मार्गकृष्ण चतुर्दशीलाई नेपाली पञ्चाङ्गमा बाला चतुर्दशी (शतवीजारोपणम्) लेखिएको पाइन्छ । बाला चतुर्दशीको शुरुआत कहिलेदेखि आरम्भ भयो भन्ने यकीन भने छैन । तर यसबारेको सन्दर्भ भने वाराहीतन्त्र, मत्स्यपुराण, स्कन्दपुराणको हिमवत्खण्डमा उल्लेख गरिएको छ । एउटा पौराणिक कथनअनुसार बालासुर नामका अत्याचारी नरभक्षी राक्षसको मृत्यु दिवसको खुशियालीको रूपमा बाला चतुर्दशीलाई मानिआएको भन्ने भनाइ पनि पाइन्छ । उपत्यका र वरिपरिका बासिन्दाले यस दिन आफ्ना आफन्त दिवंगतका घर-परिवारका सदस्यहरूले पशुपतिनाथ मन्दिरनजिक बागमती पारीको श्लेषमान्तक वन घुमेर शत्बीज छर्ने गर्छन् । मृतकको आत्मशान्तिका साथै वैष्णवीहरू दिगंवतको बैकुण्ठ बास होस् भनी कामना गरी यस पर्वमा सहभागी हुन्छन् । त्यसैगरी शैवमार्गीहरू दिवंगतको कैलाश बास र बौद्धमार्गीहरू सुखावती भुवन बास होस् भन्ने धारणा राख्छन्[1] ।

देवपट्टनस्थित मृगहरूको विचरण गर्ने मृगस्थली जहाँ लप्सी (संस्कृतमा श्लेष्म भनिने) का रूखहरू भएकाले श्लेषमान्तक वन (जसलाई बालावन पनि भनिन्छ) । यो ठाउँ रावण, कुम्भकर्ण, विभीषणजस्ता प्रतापी राक्षसराजहरूको जन्मथलो थियो । कम्ब रामायणको पूर्वकाण्डमा रावण, कुम्भकर्ण, विभीषण र सुपर्णखाको जन्म श्लेषमान्तक वनमा भएको वर्णन पाइन्छ । प्राचीनकालमा श्लेषमान्तक (पाशुपत) क्षेत्रमा भगवान् श्री पशुपतिनाथको ज्योतिर्लिङ्ग उत्पन्न हुनाको साथै शैव पाशुपतालम्बीहरूको अत्यधिकता रहेको थियो ।

उत्तरप्राचीनकालीन नेपालका अभिलेखहरूमा विभिन्न शैव पाशुपत पाशुपतालम्बीहरू उल्लेख भएबाट पाशुपत, लाकुल, शिवभागवत, माहेश्वर, लिंगायत (वीरशैव), शैव सिद्धान्त, शिवाद्वैत, मुण्डशृङ्खलिक, शृङ्खलिक, दान पाशपत, वंश पाशुपत आदिको यथार्थतामा टेवा मिल्छ । पाशुपतालम्बीहरूमा नरमुण्डमाला धारण गर्ने, नरमुण्ड पात्रमै खाने जस्ता त्यतिबेला शैव सम्प्रदायका अघोरपन्थीहरूको अस्तित्व रहेको संकेत पाइन्छ । अघोरपन्थलाई कापालिक मत पनि भनिन्छ । यस पन्थका तान्त्रिक साधुहरूले मनुष्य खोपडी ग्रहण गर्नुका साथै भैरव वा शक्ति देवीलाई बलि चढाई मद्य, मांसादि पनि गर्ने गर्दछन् । पहिले यिनीहरू नरबलि पनि दिन्थे । यिनीहरू मसानमा रही विभत्स विधिले उपासना गर्दछन् । प्राचीनकालमा यस पाशुपत क्षेत्रका (देवपट्टन) बासी अघोपन्थीहरूका नायक सम्भवतः बाला नामका व्यक्ति थिए । बालाकै नामबाट श्लेषमान्तक वनलाई बाला वन भनिएको पाइन्छ । अघोरपन्थीहरूको गढ भएको यस क्षेत्रमा अघोरीहरू नरमांसलगायत कुनै कुराको पनि भक्षण गर्न हिच्किचाउँदैनथे । अन्य धार्मिक मतालम्बीहरूको दृष्टिमा यिनीहरू राक्षस भएकाले रुष्ट हुँदै अघोर सम्प्रदायका नायक बालालाई मार्ने निश्चय गरे । बालाका अभिन्न मित्र रहेको एकजना नाइलाई हातमा लिएर तिनको हातबाट बालालाई घाँटी सेरेर मार्न लगाए । बाला अघोर मारिएपछि अघोरपन्थी पाशुपतहरू षडयन्त्रकारीमाथि बदला लिन उद्यत रहेकोले विभिन्न धर्मालम्बीहरूबीच धार्मिक विद्वेषले संघर्षको वातावरण बन्न लागेको थियो । उत्तरप्राचीनकालीन संवत् ४८७ को देवपट्टनस्थित सौरभशंकर मूर्तिको पादपीठको अभिलेखअनुसार धार्मिक विद्वेषको लहर चलेको स्पष्ट गर्दै धार्मिक संयम रहोस् भनी शंकर र केशवको आधा-आधा शरीरबाट बनेको अर्द्धशौरीश्वरको मूर्ति निर्माण गरिएको उल्लेख छ । शैव अघोरपन्थीहरूको विरोधले उग्ररूप लिएपछि षडयन्त्रकारी अन्य धर्माबलम्बीहरूले भगवान् शिवको सम्मुख क्षमायाचना गरेको लोकोख्यान छ ।[2]

पशुपतिनाथको कोपलाई उहाँसँगै क्षमायाचना गर्नाले तुरुन्तै साम्य हुन्थ्यो । यसर्थ बालालाई मार्ने षडयन्त्रकारी समूहले क्षमा मागेर कोप शान्ति गरे तर यस क्षेत्रमा रहेका घरमा कसैको मृत्यु भए त्यस वर्ष (बाला मारिएकै दिन मार्गकृष्ण चतुर्दशीका दिन) देवपट्टनस्थित बालावनमा (श्लेषमान्तक) शत्वीज छर्दै परिक्रमा गर्नुपर्ने वाचा गराई गम्भीर अपराधलाई श्रीपशुपतिनाथबाट क्षमा प्रदान भयो । सत्बीज भन्नाले सप्तधान्य धान, जौ, तील, गहुँ, चना, मकै र कागुन हुन् । सस्युँ, रायोको गेडा, लावा, सख्खरखण्ड र अन्य फलफूलका टुक्राहरू मिसाई शत्बीज छर्दै श्लेषमान्तक वनको प्रदक्षिणा गर्ने परम्परा अद्यावधि कायम रहेकै छ । पशुपति वनकाली गणेश स्थानबाट शुरु हुने यस परिक्रमा पथभित्र मृगस्थली, किराँतेश्वर, गुहेश्वरी, श्लेषमान्तक वन, विश्वरूपा मन्दिर हुँदै शत्बीज छर्छन् र यस कुरालाई आफ्ना दिवंगतलाई सुनाइदिन बहिरो गणेशसमक्ष उच्च स्वरले कराएर पशुपतिनाथ मन्दिर हुँदै कैलाशमा पुगेर परिक्रमा समापन गरिन्छ । पशुपति क्षेत्रमा चतुर्दशीको अघिल्लो रातभरि दीयो बालेर भजन र नाचगान गरी जाग्राम बसी भोलिपल्ट एकाबिहानै शत्बीज छर्ने परम्परा रहेको छ ।

जात्राकै परम्परा कायम राख्ने भित्री शहरका नेवार समुदायले यस चतुर्दशीका दिन विष्णुमति किनारमा रहेको देवी इन्द्रायणीको पूजा-जात्रा मनाउँछन् । राजा गुणकामदेवले खड्गाकारमा कान्तिपुर राज्य स्थापना गर्दा शहर तथा शहरबासीहरूको रक्षाकै लागि चारैतिर स्थापना गरेको आठ अजीमाहरूमध्ये क्षेत्रपाटी ढल्कोमा लुँतिअजीमा (इन्द्रायणी) अद्यावधि आराध्य नै छन् । यसदिन मध्यरातमा देवीको तान्त्रिक पूजा र मन्दिर अगाडिको भव्य अग्नी प्रज्ज्वलित हवनकुण्डमा सिंगो मेषमुण्डका साथै पञ्चबलिस्वरूप परेवा, भंगेरा, माछा, फट्याङ्ग्रा र सर्पको एक-एक जोडीको आहुतिसहितको तान्त्रोक्त पूजन सम्पन्न गरिन्छ । यो परम्परा गुणकामदेवको पालादेखि चलिआएको भन्ने भनाइ पाइन्छ ।

जय गुरुदेव !

१. मुनिन्द्ररत्न बज्राचाय– संन्ध्या टाइम्स, दैनिक,
२. हरिराम जोशी– नेपालको चाडपर्व (पृ१८३, १८४)

सद्‌गुरूदेव प्रवचनांश

# जीवन-प्रेम

*यस स्तम्भअन्तर्गत हामीले सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा विभिन्न समयमा विभिन्न विषयमा दिनुभएको प्रवचनलाई धारावाहिकरूपमा प्रस्तुत गर्ने क्रममा 'प्रेम धार तलवार की' विषयको प्रवचनलाई अनुवाद गरी प्रकाशन गरिएको छ ।*

जबसम्म त्यो सुवास जीवनमा हुँदैन, जबसम्म जीवनमा सुगन्ध हुँदैन तबसम्म जीवनको परिपूर्णता हुँदैन, तबसम्म जीवनमा केही पनि प्राप्त हुनै सक्दैन । सुकेको डाँठमा हरियो पात पलाउन सक्दैन, त्यसमा नयाँ-नयाँ कोपिला उत्पन्न हुन सक्दैन, सुकेको डाँठबाट पूर्वीय हावा बहन सक्दैन, सुकेको डाँठमा कुनै धड्कन, कुनै चेतना व्याप्त हुनै सक्दैन... र, तिम्रो समाजले तिमीलाई सुकेको डाँठ बनाइदिएको छ जसको उभिने मात्र कार्य हुन गएको छ ।

तिमी केवल 'स्टेचू'जस्तै उभिनका लागि होइनौ ।

यसैले मैले आजसम्मको यस सडेगलेको सभ्यतामाथि पहिलो पटक प्रहार गरिरहेको छु। आजसम्म पण्डितहरूले, मौलविय (मुस्लिम पंडित)हरूले भनेका कुरामाथि प्रहार गरिरहेको छु। आजसम्म तिम्रो सभ्यताले, तिम्रो संस्कृतिले तिमीलाई सिकाएको विषयमा प्रहार गरिरहे को छु । आजसम्म तिमी जुन धारणा, जुन चिन्तनलाई लिएर हिँडे का छौ, त्यसमाथि प्रहार गरिरहेको छु– तिमीलाई साधना गर्नुछ... तिमीलाई जीवनमा सफलता प्राप्त गर्नुछ... तिमीलाई अग्रसर हुनुछ भने जीवनमा प्रेम गर्ने कला सिक्नु नै पर्दछ, आफैमा प्रेमलाई आत्मसात् गर्नै पर्दछ, प्रेमतर्फ बढ्नुपर्दछ किनकि जीवनको आधार प्रेम हो ।

मैले त्यस प्रेमको आनन्दलाई चाखेको छु, मैले त्यस प्रेमको आनन्दलाई अनुभव गरेको छु । मैले त्यस प्रेमको परिभाषालाई बुझेको छु, म त्यस प्रेमको कल्पनालाई बुझ्दछु र म जान्दछु कि जीवनमा कति आनन्द, कति रस व्याप्त हुन जान्छ । मलाई थाहा छ कि जीवनको प्रत्येक धड्कन, जीवनको प्रत्येक चेतना, जीवनको रोम-रोममा पूर्णता महसुस हुन लाग्दछ... महसुस हुन लाग्दछ कि हामी गतिशील छौँ, प्रतिपल अगाडि बढ्ने क्रिया भइरहेको छ ।

हामी सबै एउटै ठाउँमा स्थिर हुन सक्दैनौँ, हरेक क्षण कसैको याद आइरहन्छ, हरेक क्षण एउटा अनौठो किसिमको मस्तीमा, अनौठो बेहोशीमा यो जीवन प्रवाहित हुन्छ। यस जीवनको धारा नै बदलिन्छ, जीवनको चिन्तन, जीवनको पूर्णता नै बदलिन्छ... यसैले मैले तिमीलाई साधना गर्नुभन्दा अगाडि, ती सिद्धिहरूतर्फ बढ्नुभन्दा अगाडि, मन्त्र जप गर्नुभन्दा अगाडि, इष्टको साक्षात्कार गर्नुभन्दा अगाडि फेरि एकपटक यो भन्दछु कि तिम्रो धर्मशास्त्र, ग्रन्थ, आजसम्म महावीर स्वामीले, बुद्धले र शंकराचार्यले बताएको कुरा छ, त्यो एकांगी छ किनकि उहाँहरू एकाङ्गी रहनुभयो, समाजले उहाँहरूलाई एकाङ्गी बन्न बाध्य पार्‍यो । उहाँहरूले जीवनको त्यस दोस्रो पक्षलाई चाख्नुभएन, दोस्रो पक्षलाई देख्नुभएन, त्यसको आनन्दलाई अनुभव गर्नुभएन ।

यदि एउटा विरुवाको जरामा रस छैन भने त्यस विरुवामा हरियो कोपिला आउन सक्दैन, त्यस विरुवामा सुन्दर फूल फुल्न सक्दैन, त्यस विरुवामा सुख-सौभाग्य दिने क्रिया हुन सक्दैन किनकि त्यसको जरा सुकेको छ, त्यसको जरामा कुनै प्रकारको रस छैन... र मनुष्य जातिमा पनि प्रेम आफैमा एउटा जरा हो, त्यस जरामा जबसम्म चेतना व्याप्त हुँदैन तबसम्म जीवनमा आनन्द, श्रेष्ठता र दिव्यता प्राप्त हुनै सक्दैन ।

त्यसैले एउटा गुरुको रूपमा म तिमीलाई पहिलोचोटि नयाँ दृष्टि दिइरहेको छु। त्यसैले नयाँ दृष्टि, नयाँ चिन्तन, नयाँ विचार-धारणा

दिइरहेको छु कि म तिम्रो साथ छु, तिमी समुद्रमा मेरो साथसाथै यात्रा गर, तिमी यस समुद्रमा आफैलाई गतिशील गर, तिमी एउटा लहर बन, तिमी एउटा तरङ्ग बन, तिमी एउटा उत्साह बन । एउटा यस्तो कल्पना बन जसको माध्यमबाट तिमी चारैतर्फ फैलन सक, तिमी एउटा आनन्द र परितृप्तता देख्न सक । तिमीलाई महसुस हुन सकोस् कि जीवन आफैमा एउटा मस्ती हो, एउटा परिपक्वता हो जसमा जीवनको पूर्णता र श्रेष्ठता छ । जीवनलाई सही ढङ्गबाट देख्ने क्रिया वेदले दिएको छ र वेदहरूमध्ये आदिकालीन वेद 'ऋग्वेद'मा एउटा मन्त्र स्पष्टरूपमा व्याख्या गरिएको छ–

**"पूर्व ही सदाः सदेवः प्रियां पूर्वः प्रयः"**

यदि तिमी जीवनलाई बुझ्न चाहन्छौ भने तिमीले प्रेमलाई बुझ्नुपर्दछ र यस प्रेमलाई बुझ्ने क्रियाको लागि जीवनको हृदय पक्षलाई जाग्रत गर्नुपर्दछ, ऋग्वेदले बताएको छ, हाम्रा ऋषिहरूले बताउनुभएको छ, हाम्रा प्राचीन पूर्वजहरूले भन्नुभएको छ कि तिमीलाई जीवन बुझ्नुछ, जीवनको पूर्णतालाई महसुस गर्नुछ भने तिमीले "प्रेम"लाई बुझ्नुपर्दछ ।

तिमीले जीवनलाई बुझ्ने प्रयास गरिरहेका छौ, तिमी जीवनको पूर्णतातर्फ अगाडि बढ्ने प्रयास गरिरहेका छौ, तिमी बुद्ध बन्ने प्रयास गरिरहेका छौ, तिमी समाधि लगाउने प्रयास गरिरहेका छौ । यस प्रयासबाट तिमीले पूर्णतालाई प्राप्त गर्न सक्दैनौ, यसबाट तिमीले सफलता प्राप्त गर्न सक्दैनौ किनकि वेदका अनुसार, हाम्रा शास्त्रहरूका अनुसार यदि जीवनलाई बुझ्नु छ भने आफूभित्र प्रेमलाई जाग्रत गर्नैपर्दछ, त्यस प्रेमलाई महसुस गर्नुपर्दछ, हृदय पक्षलाई जाग्रत गर्नुपर्दछ... त्यसैले मैले पहिलोपटक तिमीलाई यस महासमुद्रको यात्रामा, तिम्रो पूरा जीवनको यात्रामा एउटा आनन्ददायक पथतर्फ अग्रसर गराइरहेको छ, उबडखाबड मरुभूमीहरूमा होइन, काँडादार बाटोतिर होइन, सानो मोडतिर होइन, 'राजमार्ग'तिर अग्रसर गराइरहेको छु ।

म यस राजमार्गमा हिँडेको छु– वासनारहित, स्वार्थरहित, कुनै प्रकारको इच्छारहित शुद्ध हृदयबाट, शुद्ध मनबाट, प्रेमबाट । जीवनको चिन्तनबाट प्रेम गर्ने क्रिया मैले सिकेको छु, महसुस गरेको छु । मेरो रोम-रोममा, कण-कणमा यदि केही छ भने त्यो 'प्रेम' नै छ ।

बुद्ध आफैमा पूर्ण पुरुष बन्न सकेनन् । महावीरलाई आफैमा षोडशकलापूर्ण भनिँदैन । रामलाई पनि सोह्र कलापूर्ण मानिँदैन । सोह्रकलापूर्णको तात्पर्य हो– पूर्ण पुरुष हुनु... र शंकराचार्य पनि पूर्ण पुरुष बन्न सक्नुभएन ।

पूर्ण पुरुषको कल्पना जुन हाम्रा वेदले, शास्त्रहरूले भनेअनुसार त कृष्ण बन्न सके... त्यसैले कृष्णलाई सोह्र कलापूर्ण भनिएको छ किनकि कृष्णमा खिलखिलाहट छ, माधुर्य छ, जीवनको रस छ, अगाडि बढ्ने क्रिया छ... सबैभन्दा ठूलो कुरा त कृष्णले प्रेम गर्ने कला जान्दछ, प्रेम दिन सक्छ, लिन सक्छ । प्रेमको इतिहासमा हेर्‍यौं भने कृष्ण मात्रै देखिन्थे जो पूर्णरूपमा क्षमताका साथ उभिए, प्रेम गर्ने क्रिया जान्दथे, पूर्णरूपमा प्रेमलाई आफैमा आप्लावित गर्ने क्रिया जान्दथे ।

त्यसैले ऋषिहरूले 'राम'लाई 'मर्यादा पुरुषोत्तम'को संज्ञा दिएता पनि राम गम्भीर थिए, उनले गम्भीरताको, मर्यादाको चादर ओढिरहेका थिए ।

'महावीर' पनि यस पथमा पूर्णतासम्म पुगे तर केवल त्यागको बाटोबाट मात्र । उनीसँग त्यागबाहेक दोस्रो कुनै बाटो थिएन । त्यसैले महावीर एकछिनका लागि पनि जीवनमा मुस्कुराएनन्, मुस्कुराएको अनुहारै उनको थिएन किनकि उनको जीवनमा रस नै थिएन । उनको जीवनको रस उनको अनुहारमा प्रतिविम्बित भएन, उनमा चेतना थियो, त्यागको पूर्णता थियो, यति त्यागको पूर्णता थियो कि उनले आफ्ना वस्त्रलाई पनि छोडिदिए, उनी नग्न भएर पनि आफैमा पूर्ण बन्न सके । उनले जुन चेतना, जुन ज्ञान, जुन पूर्णता दिए त्यो आफैमा अद्‌भुत थियो, अनिर्वचनीय थियो । उनको एउटा बाटो थियो तर त्यो बाटो एकाङ्गी थियो । क्रमशः

जय गुरुदेव !

**तान्त्रिक साधना तान्त्रिक ध्यान मानव जीवनको वास्तविक ज्ञान ।**

योग विशेष

# सुप्त उदराकर्षणासन

भौतिक विज्ञान (Physics) ले पनि प्रमाणित गरेको कुरा हो कि जब कुनै स्प्रिङ्ग, रबर आदिलाई तन्काउँछौं भने त्यसमा तन्किएको अवस्थामा एक प्रकारको शक्ति सञ्चित हुन्छ जसलाई इलास्टिक पोटेन्सियल इनर्जी (Elastic potential energy) भनिन्छ । कुनै मोटो तार, सिलिन्डर वा गोलाकार वस्तुलाई बल (Shear stress) लगाएर त्यसको गोलाइतिर बटार्‍यौं भने त्यसमा पनि शक्ति जम्मा हुने गर्दछ जसलाई स्ट्रेन इनर्जी (Strain Energy) भनिन्छ । अष्टाङ्ग योगअन्तर्गत आसनहरूको अभ्यासमा पनि यही नियम लागू हुने गर्दछ ।

- जब हामी सामान्य अवस्थाबाट अंगहरूलाई तन्काउने, खुम्च्याउने, झुकाउने, मर्काउने आदि गर्दछौं तब ती अंगहरू सक्रिय हुन्छन्, प्रभावित सबै अंग-प्रत्यंगहरूले ऊर्जा प्राप्त गर्दछन् ।
- आसनको क्रममा प्रभाव परेका अंगहरूलाई अझ सक्रिय बनाउनको लागि हामी उक्त अंगहरूमा र श्वास प्रश्वासमा मनलाई एकत्रित गर्दछौं जसले गर्दा ती अंगहरू अझ बढी चैतन्य र सक्रिय बन्न जान्छन् । यदि हामीले अंगहरूको मात्र व्यायाम गर्‍यौं तर मनलाई एकत्रित गर्न सकेनौं भने त्यो अभ्यास प्रायः फलदायी र सोचेजस्तो नहुन सक्दछ ।
- यसरी शरीरमा प्राप्त भएको शक्तिलाई, चैतन्य भएका अंगलाई स्थायी रूप प्रदान गर्न आसनको अन्तमा आराम गर्ने गर्दछौं ।
- योग आसनहरूको अभ्यास गर्दा यी तीन प्रक्रियालाई ध्यान दिएर सम्पन्न गर्न सकियो भने आसनको पूर्ण लाभ प्राप्त गर्न सक्दछौं ।

सुप्त उदराकर्षणासन गर्न सर्वप्रथम शक्ति सञ्चालन क्रिया अर्थात् Warm up गर्ने । तन्किएर, झुकेर गरिने आसनहरू सम्पन्न गरिसकेपछि सुतेर यस आसनको अभ्यास गर्न सकिन्छ ।

- सर्वप्रथम उत्तानो परेर सीधा सुत्ने ।
- बिस्तारै दुवै घुँडालाई खुम्च्याउँदै माथि उठाउने । दुवै पैतालाले नितम्ब अर्थात् फिलाको अगाडि जमीनमा टेक्ने ।
- आसनको अभ्यास समयभरि दुवै घुँडाहरू र गोडाहरू जोडेर राख्ने ।
- दुवै हातका औंलाहरूलाई एक आपसमा जोडेर कैंची बनाउने र हत्केलालाई शिरको पछाडिको भागको मुनि राख्ने ।
- माथि उठाइएका दुवै घुँडालाई श्वास फाल्दै बिस्तारै दायाँतिर बङ्गाउँदै तल झार्ने र जमीनलाई छुने कोशिश गर्ने । यस समयमा देब्रे गोडा जमीनबाट केही माथि उठ्दछ ।
- त्यही समयमा शिर र घाँटी बिस्तारै घुँडा बङ्गाएको विपरीत दिशामा बङ्गाउने । यस अवस्थामा श्वास पूर्ण रूपले बाहिर फालिने हुँदा श्वासलाई भित्रै रोक्ने । मनमनै तीन सेकेन्डसम्म गन्ने ।
- यस अवस्थामा हाम्रो मेरुदण्डका हड्डीहरू, पेटका

मांसपेशीहरू बाङ्गिने र तन्कने गर्दछन् ।

- श्वास लिँदै बिस्तारै दुवै घुँडा माथि उठाउने अर्थात् पहिलेकै अवस्थामा ल्याउने । यसरी घुँडा बङ्ग्याएर जमीनतिर लाँदा श्वास फाल्ने, आसनको बीचमा श्वास रोक्ने र फेरि श्वास लिँदै घुँडामाथि उठाउने ।
- यसरी टाउको र घुँडा विपरीत दिशामा मर्काउँदा पेटमा विशेष असर पर्न जान्छ त्यसैले श्वास फाल्नु पर्ने हुन्छ । यदि श्वास लिएर यस आसनको अभ्यास गऱ्यौं भने मुटु, फोक्सो र पेटका अन्य अंगहरूलाई हानी गर्न सक्दछ ।
- कैँची बनाइएका हातका औंलाहरू, कुम, पाखुरालाई अभ्यास समयभरि नचलाउने ।
- त्यसैगरी घुँडालाई देब्रेतिर मोड्ने, शिर र घाँटीलाई दाहिनेतिर मोडेर अर्को दिशाको अभ्यास गर्ने । यसरी अभ्यासको एक चक्र पूरा हुन्छ ।
- अभ्यासको क्रममा मनलाई श्वास-प्रश्वास, मानसिक गन्ती, मर्काइएका भागहरू, पेटका मांसपेशीहरू आदिमा केन्द्रित गर्ने ।
- यस्तो पूर्ण पाँच चक्रको अभ्यास गर्ने ।

**सावधानी :**

यदि कम्मरमा धेरै नै समस्या छ भने, मेरुदण्डमा धेरै समस्या छ भने यस आसनको अभ्यास गर्नुहुँदैन । साथै आसनको क्रममा धेरै असजिलो भयो, धेरै दुख्ने भयो भने पनि आसन गर्न छोड्नुपर्दछ र स्पष्ट बुझेर मात्र गर्नुपर्दछ ।

**फाइदा :**

- यस आसनबाट पेटका मांसपेशीहरूमा असर पुग्ने हुँदा पेटको दु:खाइ, पखाला, अपच, कब्जियत, ग्याष्ट्रिक रोगमा लाभ पुग्दछ, पाचनशक्ति बढाउँछ र पेटलाई हलुका बनाउँछ ।
- ढाड दु:खाइ, कम्मर दु:खाइ, हाडजोर्नी दु:खाइ, सर्भाइकल स्पोन्डिलाइटिस, स्लिपडिस्क एवं सियाटिका रोग आदिमा विशेष लाभदायक छ ।
- कम्मरको जोर्नीको दु:खाइमा, मेरुदण्डको सबै समस्याहरूमा पनि लाभदायक छ ।

जय गुरुदेव !

## आश्रममा उपलब्ध सेवाहरू

- योग, ध्यान, हिप्नोटिज्म, आदि बारे अध्ययन, अनुसन्धान एवं परामर्श सेवा ।
- मन्त्र शक्तिद्वारा हाम्रो दैनिक जीवनमा आइपर्ने विविध समस्याहरूको समाधान ।
- फोटो थेरापीको माध्यमबाट असाध्य रोगहरूको उपचार ।
- मन्त्र तन्त्रको माध्यमबाट साधनामा अघि बढ्न चाहने साधक साधिकाहरूलाई विशेष मार्गनिर्देशन ।
- पूर्ण प्रामाणिकरूपमा विशेष प्रक्रियाद्वारा प्राण-प्रतिष्ठित यन्त्र, माला, आसनलगायत साधनाका लागि आवश्यक सम्पूर्ण सामग्रीहरूको व्यवस्था ।
- परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको बारेमा अध्ययन अनुसन्धान एवं जानकारी चाहनेहरूका लागि गोरक्ष निखिल पुस्तकालयको व्यवस्था ।
- विभिन्न किसिमका रोगहरूको उपचारका लागि विशेष तान्त्रिक हिलिङ्को व्यवस्था ।

# आश्रम गतिविधि

## मासिक हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रले हरेक महिनाको पहिलो सोमबार, मंगलबार, बुधबार र बिहीबार मासिकरूपमा सम्पन्न गर्दै आइरहेको हवन कार्यक्रमहरू गत कार्तिक महिनामा पनि सम्पन्न भयो । कार्तिक ४ गते पशुपति मृगस्थलीस्थित गुरु गोरखनाथको मन्दिर परिसरमा श्री शिव गोरक्ष हवन, ५ गते लगनखेलस्थित वटुक भैरव मन्दिर परिसरमा तान्त्रोक्त वटुक भैरव हवन, ६ गते लगनखेलस्थित महालक्ष्मी मन्दिरमा तान्त्रोक्त महालक्ष्मी हवन र ७ गते पाटन कुम्भेश्वरस्थित बगलामुखी मन्दिर परिसरमा तान्त्रोक्त बगलामुखी हवन सम्पन्न भयो । उक्त हवनहरूमध्ये तान्त्रोक्त वटुक भैरव हवन बिहान ७:०० बजे सञ्चालन भएको थियो भने बाँकी हवन कार्यक्रमहरू बिहान ८:०० बजे सञ्चालन भएको थियो । १ घण्टासम्म सञ्चालन हुने उक्त हवन कार्यक्रमहरूमा सहभागी भएर हवन गर्दा सद्गुरुदेव एवं सम्बन्धित देवीदेवताको आशीर्वाद सहजै प्राप्त हुने भएकाले सहभागीहरूको संख्या बढिरहेको छ ।

## दिव्य गुरू महोत्सव

आफ्ना परम आराध्य सद्गुरुव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले यस धरामा डा. नारायण दत्त श्रीमालीको रूपमा सन् १९३३ अप्रिल २१ तारीखमा अवतरित हुनुभएको स्मरणमा सिद्धाश्रम शक्ति केन्द्रले हरेक महिनाको २१ तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउँदै आइरहेको छ । यस क्रममा गत कार्तिक ५ गते उक्त कार्यक्रम सम्पन्न भएको छ ।

बिहान १०:१५ बजे गोरक्ष निखिल स्तवनको सामूहिक वाचनबाट शुरु भएको उक्त कार्यक्रमको पहिलो चरणअन्तर्गत गुरु पादुका पूजन, मन्त्रजप, हवन, गुरु आवाहन भजन, आरती सम्पन्न भएको थियो । कार्यक्रममा प्रसाद वितरणको अभिभारा वहन गर्ने साधिकाहरू शकुन्तला तिमिल्सिना, ज्ञानु रेग्मी, पूजा सिग्देल, जयन्ती पुडासैनी र श्वेता पुडासैनीले गुरु पादुका पूजन गर्ने सौभाग्य प्राप्त गर्नुभएको थियो ।

सिद्धाश्रम शक्ति केन्द्रको तर्फबाट गुरुसेवा दलका सदस्य जयलाल गुरुङको स्वागत मन्तव्यबाट शुभारम्भ भएको कार्यक्रमको दोस्रो चरणअन्तर्गत भजन-कीर्तन, नृत्य, पुरस्कार वितरण, प्रवचन आदि रहेका थिए । गोरक्ष निखिल वाणी पत्रिकाको ५० जना वार्षिक ग्राहक बनाएर साधक केशव न्यौपानेले तथा २० जना वार्षिक ग्राहक बनाएर साधिका रेखा क्षेत्री र साधक हरिहर सिग्देलले सद्गुरुदेवप्रदत्त विशेष धारण माला उपहारस्वरूप प्राप्त गर्नुभएको थियो । स्ववचन एवं प्रवचनको क्रममा आफ्ना भनाइ राख्ने क्रममा सावर पन्थी नं.२ का सदस्यज्यूले भन्नुभयो– 'दीपावलीको अवसरमा हामी जसरी हर प्रकारका दीयोहरू बालेर बाहिर प्रकाशित पार्छौं त्यसरी नै सबैले आफ्नो अन्तर्हृदयलाई नै उज्यालो पारेर आफ्नो जीवनमा प्रकाश छर्ने प्रयास गरौं । जहाँ सफा, उज्यालो र पवित्रता छ त्यहाँ मात्र भगवान्को बास हुने भएकाले हामीले सद्गुरुदेव तथा देवीदेवता बस्नलायक हृदय बनाउन सक्यौं भने हाम्रो जीवन सधैं प्रकाशित भइरहने छ, हामी सधैं प्रसन्न, प्रफुल्ल रहन सक्छौं ।' सो क्रममा उहाँले दीपावली २०६५ को अवसरमा सबैमा शुभकामना पनि व्यक्त गर्नुभएको थियो । गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम परिसरमा सञ्चालित उक्त कार्यक्रम सावर पन्थी नं.३ का सदस्यज्यूले सञ्चालन गर्नुभएको थियो ।

## महालक्ष्मी पूजन

परमपूज्य सद्गुरुदेवहरूको परम कृपा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्र नेपालले लक्ष्मीपूजाको पावन दिनमा माता महालक्ष्मीको सूक्ष्म उपस्थितिमा महालक्ष्मी पूजन गर्ने सौभाग्य प्राप्त गऱ्यो । यसप्रकारको पूजन सिद्धाश्रम शक्ति केन्द्रका अन्य सम्पर्क कार्यालयहरूमा पनि सम्पन्न भएको थियो । परम आराध्य सद्गुरुदेवहरूको स्तुति-वन्दनाबाट बिहान ८:०० बजेबाट शुरु भएको कार्यक्रममा सद्गुरुदेव एवं माता महालक्ष्मीको पूजन र आरती सम्पन्न भएका थिए । केन्द्रीय कार्यालयमा सम्पन्न भएको कार्यक्रममा सिद्धाश्रम शक्ति केन्द्र सावर पन्थी नं. १, २ र ४ ज्यूले भौतिक सामग्रीहरूले पूजन गर्ने सौभाग्य प्राप्त गर्नुभएको थियो भने सावर पन्थी नं.३ ज्यूले कार्यक्रम सञ्चालन गर्नुभएको थियो । सिद्धाश्रम शक्ति केन्द्रले गत वर्षदेखि यस्तो सौभाग्य प्राप्त गर्दै आइरहेको छ ।

## द्यौसी-भैलो कार्यक्रम

शुभ दीपावली २०६५ को अवसरमा सिद्धाश्रम शक्ति केन्द्र नेपाल अन्तर्गतका विभिन्न जिल्लामा रहेका सम्पर्क कार्यालयहरूले यस पटकको द्यौसी-भैलो कार्यक्रमलाई हर्षोल्लासपूर्वक मनाए । यस क्रममा उपत्यकामा रहेका भक्तपुर, ललितपुर सम्पर्क कार्यालयका अतिरिक्त पोखरा, तनहुँ, बनेपा लगायतका सम्पर्क कार्यालय र यसअन्तर्गतका आरती सञ्चालन केन्द्रहरूको आयोजनामा सम्पन्न भयो ।

## गुरुसेवा दलको तालिम सम्पन्न

सिद्धाश्रम शक्ति केन्द्रले आफ्ना कार्यकर्तालाई मासिकरूपमा सम्पन्न गर्दै आइरहेको तालिम तथा प्रशिक्षण कार्यक्रमको क्रममा गत कार्तिक २० र २१ गते काठमाडौँमा गुरुसेवा दल तहको एघारौँ तालिम सम्पन्न गऱ्यो । विहान १०:०० बजे देखि साँझ ५:३० बजेसम्म द्विदिवसीयरूपमा सम्पन्न उक्त तालिम कार्यक्रममा काठमाडौँ, ललितपुर, चितवन, सर्लाही, गोरखा, लमजुङ्ग, स्याङ्गजा, कास्की र बाँके जिल्ला गरी जम्मा ५१ जनाको सहभागिता रहेको थियो । उक्त कार्यक्रममा सम्पन्न भएको दिव्य गुरु पादुका पूजन गर्ने सौभाग्य पहिलो दिनमा साधिकाहरू संगीता लामिछाने, नीता प्याकुरेल, सुषमा लामिछाने र मीनु सिग्देल तथा दोश्रो दिनमा साधिकाहरू शकुन्तला तिमिल्सिना, सुमित्रा लामा, साधकहरू सुन्दरराज आचार्य र भोजराज जोशीले प्राप्त गर्नुभएको थियो ।

अत्यन्तै गोप्य, कौतुहलपूर्ण र गूढ ज्ञान रहस्यले भरिएको उक्त तालिम कार्यक्रममा अन्तर्मुखी हुने कला, सावर साधना, सावर ध्यान, गु.से.द. र संगठन, सा.सं.श.के., मनुष्यलोक तथा देवलोक, अन्तक्रिया जस्ता गहन विषयहरूका साथै प्रयोगात्मकरूपमा सावर साधना र सावर ध्यान पनि सम्पन्न भएको थियो । यसै तालिम देखि गुरु सेवा दलमा विभिन्न वैकल्पिक रंगहरू पनि प्राप्त भएको थियो ।

यसरी अत्यन्तै प्रेरणादायी रहेको यस तालिम कार्यक्रमको अन्त्यतिर सुनाइएको कार्यकर्ताको ग्रेडिङ्ग पनि कौतुहलपूर्ण थियो जस अनुसार गोरक्ष रंगबाट निखिल रंगमा जयलाल गुरुङ्ग, वैकल्पिक निखिल रंगमा कोपिला थापा, अनु श्रेष्ठ, होमबहादुर थापा, त्यस्तै रातो रंगबाट वैकल्पिक गोरक्ष रंगमा माधवप्रसाद ढकाल, रामचन्द्र लोहनी, मुना राई, निमप्रसाद ढकाल, निलो रंगबाट वैकल्पिक रातो रंगमा गोपालबाबु तिवारी, सिद्धि महर्जन, बालकृष्ण श्रेष्ठ र हरियो रंगबाट वैकल्पिक निलो रंगमा मदनलाल श्रेष्ठ, प्रभुसुन्दर श्रेष्ठ र नीता प्याकुरेल पदोन्नत हुनुभएको थियो ।

## सौरपानी सम्पर्क कार्यालय आफ्नै भवनमा

सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय सौरपानी, गोरखाले आफ्नै भवन निर्माण गरि गत कार्तिक २४ गते नयाँ भवनमा सरेको छ । कार्तिक २५ गतेदेखि नित्य आरती पनि सोही स्थानमा नै सम्पन्न हुँदै आएको छ ।

## पत्रिका सदस्यता विस्तारका लागि हार्दिक आह्वान

**परमपूज्य सद्गुरुदेवहरूको असीम कृपा, अनुकम्पास्वरूप गोरक्ष निखिल वाणी प्रकाशनको निरन्तरतालाई कायम राख्दै दशौँ वर्षमा प्रवेश गर्न सफल हुनाका साथै नेपाल सरकार, प्रेस काउन्सिलको पत्रिका वर्गीकरणमा 'क' श्रेणीमा पर्न सफल भएको सहर्ष जानकारी गराउँदै आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिकलाई यस स्तरसम्म लिएर आउने महान् कार्यमा सक्रियरूपमा सहभागी सबैलाई हार्दिक धन्यवाद दिन चाहन्छौँ । यस मासिकलाई अझै पठनीय, संग्रहणीय र स्तरीय बनाउने कृतसंकल्प गर्दै पत्रिकामार्फत सद्गुरुदेवहरूको चिन्तन विस्तार गर्न र जन-जनमा आध्यात्मिक ज्ञानको प्रकाश फैलाउन यस पत्रिकाको ग्राहक विस्तार योजनामा भाग लिई अक्षय पुण्य आर्जन गर्नका लागि सम्पूर्ण साधक साधिका, कार्यकर्ता र जिज्ञासु महानुभावहरूमा हार्दिक अनुरोध गर्दछौँ । पत्रिका विस्तारका लागि आवश्यक रसिदका लागि संस्थाको पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभाग, नजिकका सम्पर्क कार्यालय एवं आरती संचालन केन्द्रहरूमा सम्पर्क राख्नुहुन पनि सूचित गरिन्छ ।**

**सिद्धाश्रम शक्ति केन्द्र**

**पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभाग**

फोन नं ०१-२१००१५३, ०१-२०७१२००, ०१-६२२५१७७

श्रीमालीज्यू शान्त हुनुहुन्थ्यो । उहाँले भन्नुभयो– म तपाईंको उमेरलाई दृष्टिगत गरेर तपाईंको सम्मान गर्दछु तर साधना-सिद्धिको क्षेत्रमा तपाईं अझै अत्यन्तै कमजोर हुनुहुन्छ । तपाईंलाई म एउटा अर्को अवसर दिन्छु किनकि अहिले पनि म तपाईं सामु उपस्थित छु, तपाईंसँग भएको ठूलोभन्दा ठूलो शक्तिको प्रयोग गर्नुहोस् ।

माँ कृपालु भैरवीले उठेर भनिन् कि कपाली बाबाले मानवताबाट हटेर त्यस्तो प्रयोग गरे तर श्रीमालीज्यूको सौजन्यता हो कि उहाँले फेरि एउटा अवसर दिँदै हुनुहुन्छ । तर जो हारे पनि उसले जित्नेको शिष्यत्व स्वीकार्नुपर्दछ । अधिकांश तान्त्रिकहरूले उनको प्रस्तावलाई अनुमोदन गरे । यसबाट कपाली बाबा केही विचलित भए पनि पुन: उभिएर आफ्नो जाँघबाट मासु थुतेर त्यसबाट एउटा सेतो गोली निकाले र आफ्नो दाहिने हत्केलामा राखेर भने– श्रीमाली ! यो तिम्रो लागि अन्तिम अवसर हो । यसपटक तिम्रो मृत्यु निश्चित छ ।

त्यसबेला श्रीमालज्यू अविचलित भावमा मुठ्ठी बाँधेर उभिएरै केही मन्त्र गुनगुनाइरहनु भएको थियो ।

कपाली बाबाले यसपटक सम्पूर्ण शक्ति लगाएर विध्वंस प्रयोग गरिरहेका थिए जसमा बाउन्न भैरव र चौसठ्ठी योगिनीको संहारक तथा विध्वंसक शक्तिको प्रयोग हुन्छ । निरन्तर मन्त्र जपबाट उनको हातको तलतिरबाट रगतको थोपा चुहिन लागेको थियो र अकस्मात् उनले त्यस गोलीलाई श्रीमालीज्यूतिर फ्याँके ।

श्रीमालीज्यू केही लड्खडाउनु भयो र एक सेकन्डको लागि मञ्चमा बस्न पुग्नुभयो तर तुरुन्तै उठेर आँखा खोल्नुभयो । उहाँको अनुहारमा क्रोधको मात्रा आवश्यकताभन्दा बढी थियो, आँखा रक्तिम र पूरा शरीर आगोजस्तै रातो हुन गयो ।

सबै तान्त्रिकहरूमा भयमिश्रित हर्षको एउटा लहर देखियो । सबै आश्चर्यचकित थिए कि यस साधारण जस्तै देखिने व्यक्ति यति विघ्न दिव्य हुन सक्नुहुन्छ । त्रिजटाले दौडेर मञ्चमा गएर श्रीमालीज्यूलाई काँधमा थाम्नुभयो । कपाली बाबाको आँखामा भने याचना थियो, कमजोरी थियो ।

श्रीमालीज्यूले भन्नुभयो– कपाली बाबा ! प्रत्येक साधनाका केही नियम हुन्छन्, कुनै पनि साधकले ती नियमहरूलाई तोड्दैन । भीषणतम शत्रुमाथि पनि यस्तो प्रयोग गरिन्न किनकि यो तान्त्रिक मान्यताको विपरीत छ तथा मानवताको विरोधी हो । यही प्रयोग यदि पहाडमाथि गरिएको भए त्यसको अस्तित्व नै समाप्त हुन जान्छ । अब म तिमीलाई पनि छोड्दिन तर मानवताका साथ । हुन सक्छ भने सम्हाल आफैलाई । यदि तिमीले यस प्रयोगलाई झेल्छौ भने म परास्त हुन्छु । यति भनेर उहाँको मुखमुद्रा कठोर भयो, अनुहार रातो-निलो थियो, आँखाबाट ज्वाला निस्किरहेको थियो । उहाँले हावामा हात हल्लाउनुभयो र तल झारेर तन्काएर सामुन्ने मुठ्ठी खोल्नुभयो, यस्तो लाग्यो कि कुनै वस्तु सामुन्ने फ्याँक्नु भएको थियो ।

एक क्षणमा नै कपाली बाबा धर्तीमा ढलिसकेका थिए, उनको मुखबाट रगत बगिरहेको थियो । यस्तो लागिरहेको थियो कि तीन-चार मिनेटभित्रै केही उपाय नगरे उनी रहने छैन । सबैले उनलाई घेरेर उभिए ।

तब श्रीमालीज्यूको आवाज गुञ्जियो– सबै आ-आफ्नो स्थानमा बस्नुहोस् अन्यथा सबैको यस्तै स्थिति हुनेछ । यदि कपाली बाबाले क्षमा माग्छ भने दया गरेर उसलाई जीवनदान दिन्छु ।

# परमपूज्य सद्गुरुदेवको अवतरण यात्रा

तान्त्रिक, अघोरी आदि भयाक्रान्त भएर बसे। तबसम्म श्रीमालीज्यू कपाली बाबासमीप आउनुभयो । कपाली बाबाले हात जोडेर माफी मागे। श्रीमालीज्यूले शून्यबाट कुनै वस्तु प्राप्त गरेर कपाली बाबामाथि राख्नुभयो र केही समयपछि बाबा चैतन्य भए ।

मञ्चमा आएर कपाली बाबाले क्षीण स्वरमा आफ्नो पराजय स्वीकार गरे र शिष्यत्वका लागि आग्रह गरे ।

श्रीमालीज्यूले प्रतीकरूपमा कपाली बाबाको अगाडिको केही कपाल उखेलेर शिष्यत्व प्रदान गर्नुभयो । सभामा प्रसन्नता र हर्ष फै लियो, भुर्भूआ बाबाले श्रीमालीज्यूलाई अङ्गालोमा बाँध्नुभयो, उहाँको नेत्र अश्रुपूरित भयो । सबैले एकै स्वरमा स्वीकार गरे कि साधना, सिद्धिको क्षेत्रमा श्रीमालीज्यू अद्वितीय हुनुहुन्छ र यो सबैको सौभाग्य हो कि सभामा उहाँ उपस्थित हुनुहुन्छ। श्रीमालीज्यूको सभापतित्वमा सम्मेलन पूर्णरूपमा सफल भयो। यसपछि श्रीमालीज्यू फर्केर जोधपुर आउनुभयो र त्यस्तै सामान्य तरीकाले सरल, निश्छल जीवन व्यतीत गर्न लाग्नुभयो ।

वास्तवमा यस तान्त्रिक सम्मेलनको विशिष्ट उपलब्धि यो थियो, अघोरीको कृपाबाट यस रहस्यको पर्दाफास हुन सक्यो कि डा. नारायण दत्त श्रीमालीज्यू नै विश्ववंद्य स्वामी सच्चिदानन्दज्यूका प्रिय शिष्य स्वामी निखिलेश्वरानन्द हुनुहुन्छ किनकि श्रीमालीज्यूले त केही पनि स्पष्ट हुन दिनुहुन्नथ्यो। षोडशकला सम्पूर्ण भएर पनि यसप्रकार आफ्नो चारैतर्फ माया फैलाएर बस्नुहुन्थ्यो कि कसैले पनि बुझ्न सक्दैन थियो कि उहाँ सरल, साधारण गृहस्थ हुनुहुन्छ वा पूर्णेश्वर ।

स्वामी निखिलेश्वरानन्दले पूरै हिमालयलाई आफ्नो पैतालाले नाप्नुभयो । उहाँले नै सबै तान्त्रिक, मान्त्रिक, साधुहरू, योगी, अघोरीहरूलाई एउटै मञ्चमा उभ्याउनुभएको थियो, उहाँले संन्यासीहरूलाई सिद्धाश्रम प्रवेश दिलाउन दिव्याश्रमको स्थापना गर्नुभयो, गन्धमादन पर्वतनिर भद्रशीला नदीले छोएको यस आश्रममा उनीहरूलाई साधनाको उच्च धरातलमा पुऱ्याएर सिद्धाश्रममा प्रवेश गराउन उहाँले विशिष्ट तान्त्रिक पीठहरूको स्थापना गर्नुभयो र यसको जिम्मा महायोगी गुरु गोरखनाथलाई दिनुभयो। सिद्धाश्रम प्रवेश अत्यन्त दुष्कर थियो तर सिद्धाश्रम द्वारमा शतअष्टोत्तर मुंडी सिद्ध पीठको स्थापना गरेर सिद्धाश्रम प्रवेश सबैका लागि सरल, सहज गर्नुभयो ।

स्वामी निलिखेश्वरानन्दज्यूको विषयमा केही पनि भन्नु सूर्यलाई दीयो देखाउनु समान छ। एकपटक एकजना शिष्यले बताउनुभएको थियो कि स्वामी निखिलेश्वरानन्दज्यू अत्यधिक कठोर हुनुहुन्छ तर अत्यन्तै सरल हृदयका पनि हुनुहुन्छ। एकपटक टिहरीछेउ उहाँले चार महिना बस्ने निधो गर्नुभयो । सहरनजिकै एउटा सुन्दर शिव मन्दिर थियो, उहाँले त्यसैमा स्थान बनाउनुभयो । उहाँको निश्चय थियो कि त्यहाँ रहेको खण्डहरबाट भाँचिएको शिव मन्दिरको जीर्णोद्धार गराउने, यसका साथसाथै उहाँ कुनै विशिष्ट साधना पनि सम्पन्न गर्न चाहनुहुन्थ्यो जुन कि सबै दृष्टिबाट अनुकूल होस् ।

त्यहाँ बस्नुभएको दस-पन्ध्र दिनपछि एकजना अघोरी मन्दिरभित्र आएर बस्यो । उसको सारा शरीर तेलै तेल, मैलो र गन्धयुक्त थियो जसको कारण उसको जीउमा झिँगा भुनभुनाइरहेको थियो, शरीरबाट दुर्गन्ध आइरहेको थियो। मैले त्यस अघोरीलाई त्यहाँ जान भनेँ तर ऊ त आफ्नो साधनाको मदमा डुबेको थियो, यसैले अवज्ञावश हाँसिदियो ।

दोस्रो-तेस्रो दिनमा त अचम्मै भयो । उसले शिवलिङ्गलाई उखेलेर मन्दिर बाहिर लगेर राखिदियो । यद्यपि दुई-तीन दिनदेखि स्वामी निखिलेश्वरानन्दज्यू चिढिरहनु भएको देखिनुहुन्थ्यो, आजको यस घटनाबाट उहाँ अत्यधिक क्रोधित हुनुभयो । तर आफैलाई अत्यन्तै संयमित राख्नुभयो ।

देख्तादेख्तै उसले मन्त्रबलबाट नजिकैको चारवटा रूखलाई जलायो। यी रूख हराभरा, घना र छायादार थिए तर पाँच मिनेटमा नै जलेर खरानी भए। मारक प्रयोगमा ऊ सिद्धहस्त अघोरी थियो र राति नित्य मसान जागरण क्रियामा संलग्न रहन्थ्यो जसको कारण अत्यन्तै आवाज, हल्ला हुन्थ्यो र हाम्रो साधनामा व्यवधान भइरहन्थ्यो। मैले र स्वामीज्यूले चार-पाँच पटक सम्झाउँदा पनि उसले कुनै ध्यान दिएन ।

स्वामीज्यूले जस्तोसुकै अवस्थामा पनि आफ्नो शिष्यको पूरापूर रक्षा गर्नुहुन्थ्यो र उसको सम्मानको पूरा ख्याल गर्नुहुन्थ्यो । उहाँले अघोरीलाई हप्काउनुभयो तर यसबाट अघोरी झन् रिसाएर उसले ममाथि मारण प्रयोग गऱ्यो, फलस्वरूप मेरो मुखबाट रगत बग्न लाग्यो, मैले कमजोरी अनुभव गरेँ ।

मैले देखेँ कि स्वामीज्यूको अनुहार रातो-निलो भयो। उहाँले एक क्षणमा नै ममाथि गरिएको मारण प्रयोगलाई त हटाउनुभयो नै, फर्केर त्यस अघोरीमाथि यस्तो तीव्र मारण प्रयोग गर्नुभयो कि त्यो जमीनमा ढल्न पुग्यो, आँखा माथि फर्कायो, सारा शरीर निलो हुन गयो। हामी सबैले अत्यन्तै अनुनय-विनय गरेपछि स्वामीज्यूको क्रोध शान्त भयो र त्यस अघोरीलाई जीवनदान मिल्यो ।

एकातिर यस्तो अमोघ र कठोर वक्षस्थल र अर्कोतिर उहाँको जीवनको एउटा सानो अर्को घटना पनि छ–

त्यसै मन्दिरमा एउटा चराले गुँडमा अण्डा पारेको थियो । केही दिनपछि अण्डाबाट बच्चाहरू बाहिर निस्केर यताउता कुद्न लागे, स्वामीज्यूले उनीहरूको अन्नपानीको व्यवस्था गरेर ठीक त्यस प्रकारले पालन-पोषण गर्नुहुन्थ्यो जुन प्रकारले एउटी आमाले आफ्ना बच्चाहरूको पालन-पोषण गर्छिन् ।

एकदिन केही माथिल्लो ठाउँबाट चराको एउटा बच्चा खस्यो, बच्चा छट्पटायो, स्वामीज्यू साधनारत हुनुहुन्थ्यो, उहाँले त्यसै समय मन्त्र जपलाई छोडेर माला एकातिर राख्नुभयो र चराको बच्चालाई उठाउनुभयो । उहाँको आँखामा आँसु रसाउन थाल्यो । पछि पाँच दिनसम्म उहाँ अत्यन्तै उदास, खिन्न र चिन्तित रहनुभयो, ती पाँच दिनमा एकपटक पनि मन्त्र जप गर्नुभएन । पूरा समय बच्चाको रेखदेख र ख्यालमा नै बिताउनुभयो। पाँच दिनसम्म उहाँले खाना पनि खानुभएन । यति धेरै उदात्त, यति ममत्व त आमाको पनि आफ्ना बच्चाप्रति हुँदैन ।

एक हप्तापछि जब चराको बच्चाको खुट्टा ठीक भएर उड्न सक्ने भयो तब स्वामीज्यूले राहतको सास लिनुभयो र आफ्नो साधनामा लाग्नुभयो। क्रमशः जय गुरुदेव !

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरूप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौं ।**

**तापत्रयाग्नि तप्तानाम्**
**अशांत प्राणिनां भुवि ।**
**यस्य पादोदकं गंगा**
**तस्मै श्री गुरवे नमः ॥ १२७ ॥**

भावार्थ : जुन गुरुको पावन चरणोदक संसारमा आध्यात्मिक, आधिदैविक, आधिभौतिक तीनै तापरूपी अग्निमा संतप्त जीवहरूका लागि गंगा समान छ, त्यस्ता परम पावन गुरुलाई म अत्यन्तै भक्तिभावका साथ नमस्कार गर्दछु । आधिभौतिक तापको अर्थ हो सांसारिक कष्ट । जस्तै, सर्पको टोकाइ आदि । आधिदैविक तापको अर्थ हो– देवताहरूबाट प्राप्त दुःख । जस्तै, बाढी, भुइँचालो, अनावृष्टि आदि र आध्यात्मिक तापको अर्थ हो– अज्ञानताबाट उत्पन्न दुःख ।

**अज्ञान सर्पदंष्ट्रानां**
**प्राणिनां कश्चिकित्सकः ।**
**सम्यग्ज्ञान महामंत्र**
**वेदिनं सद्‌गुरुं बिना ॥ १२८ ॥**

भावार्थ : अज्ञानरूपी सर्पको टोकाइले पीडित प्राणीहरूलाई मनासिव ज्ञानरूपी महामंत्र दिने गुरुबाहेक अरू कुनै चिकित्सक हुनुहुन्न । जसरी सर्पले टोक्दा मंत्र जान्ने व्यक्तिले मंत्रको माध्यमले सर्पको विष समाप्त गरेर त्यस व्यक्तिलाई स्वस्थ बनाइदिन्छ, त्यसै किसिमले अज्ञानरूपी अन्धकारमा दिग्भ्रमित प्राणीलाई वास्तविक ज्ञान दिएर गुरुले नै बचाउन सक्नुहुन्छ । शिष्यले पूर्णत्व प्राप्तिका लागि गुरु-चरणमा बस्नै पर्छ ।

**कुलानां कुलकोटीनां**
**तारकस्तत्र तत्क्षणात् ।**
**अतस्तं सद्‌गुरुं ज्ञात्वा**
**त्रिकाल मभिवादयेत् ॥ १२९ ॥**

भावार्थ : गुरुले करोडौं-करोड कुल परम्पराहरूलाई पावनतम बनाएर एक क्षणमा नै दुःखसागरबाट पार गराइदिनुहुन्छ । यस्ता दिव्य सद्‌गुरुलाई प्रातः, मध्याह्न, साँझ तीनै कालमा अभिवादन गर्नुपर्छ । गुरु आफ्नो तपस्याको माध्यमले कृपावश कसैलाई पनि दुःखबाट बाहिर निकाल्न सक्नुहुन्छ, किनकि गुरु सधैं केही दिनलाई नै शरीर धारण गर्नुहुन्छ, उहाँका प्रत्येक कार्य कल्याणकरी हुन्छन् । शिष्यले निरन्तर गुरुको सेवा एवं सङ्गतको कामना गर्नुपर्छ ।

**साष्टांग प्रणिपातेन**
**स्तुवन्नित्यं गुरुं भजेत् ।**
**भजनात्स्थैर्य माप्नोति**
**स्वस्वरूपयो भवेत् ॥ १३० ॥**

भावार्थ : साष्टाङ्ग प्रणाम गरेर गुरुको स्तुतिगान, भजन गरिरहनुपर्छ, उहाँको सतत भजन एवं चिन्तनले साधकको बुद्धि स्थिर हुन्छ । बुद्धि स्थिर भएको साधक आफ्नो स्वरूपलाई चिन्न सफल हुन्छ । गुरुको निरन्तर चिन्तनले साधकको बुद्धि गुरुको प्राणसँग जोडिएर निरन्तर पवित्र हुन जान्छ, त्यसपछि पावन मतिले नै गुरुको ब्रह्ममय स्वरूप प्रकट भएर शिष्यको कल्याण हुन्छ ।

जय गुरुदेव !

# श्री निखिलेश्वर शतकम्

**॥१०३॥**

**गर्भस्थितानपि शिशून् प्रददाति दीक्षां,**
**यश्चेतनाभिरमलैश्च सुतीक्ष्णधीभि-**
**स्तान् संस्करोति तमुदारचरित्रवन्तम्;**
**वन्दे गुरो ! निखिल ! ते चरणारविन्दम् ॥**

**॥१०४॥**

**पादप्रहारगदया विनिहत्य जाड्यं,**
**षट्चक्रजागृतिभगं झटिति प्रदाय;**
**यः साधकानुपरोति तपः समिद्धम्;**
**शिष्यप्रियं तमहमद्य गुरुं प्रपद्ये ॥**

व्यक्तित्व निर्माणार्थ संस्कारहरूको मुख्य भूमिका हुन्छ । हाम्रो संस्कृतिमा यस कार्यमा सुनिश्चित सफलता प्रदान गर्ने सोह्र (षोडश) संस्कारको शास्त्रोक्त व्यवस्था गरिएको छ जसलाई भावी जीवनको दिशा सुदृढ गर्ने आधारशिलाको रूपमा लिइन्छ । यसको तयारी शिशुको जन्मभन्दा पूर्व गरिएमा समर्थ, साहसी एवं चरित्रबलसम्पन्न व्यक्तित्वयुक्त मानव निर्मित हुन्छ । आज यस भूमिकालाई सुनियोजित रूपमा दिशा दिन सक्ने मनीषिहरूको अभाव छ, तर पूज्य गुरुदेवले आज पनि त्यस ऋषि परम्परालाई सफलतापूर्वक निर्वाह गरिरहनुभएको छ जसले गर्भमा रहेको शिशुलाई समेत दीक्षा प्रदान गरेर उसलाई निर्मल चेतना एवं तीक्ष्ण बुद्धि प्रदान गरेर संस्कारसम्पन्न बनाउनुहुन्छ । यस्ता उदारचरित्रसम्पन्न हे गुरुदेव ! निखिलेश्वर ! म हजूरको चरणकमलको सादर वन्दना गर्दछु ।

शक्तिपातका माध्यमले कुण्डलिनी जागरण गराउन सक्ने अनेक योगीहरूको चर्चा सुन्नमा आउँछ, पूज्य गुरुदेव निखिलेश्वरानन्दज्यू स्वयं पनि आज्ञा चक्रमा औंला राखेर वा दृष्टिपातका माध्यमबाट उक्त शक्तिपात प्रक्रिया गराउनमा सिद्धहस्त हुनुहुन्छ तर पाउको आघातबाट कुण्डलिनी जगाएर यथेच्छ चक्रलाई जागृत गराउने एवं पूर्ण चैतन्यमय वनाउने उहाँसँग शक्तिपातको अनौठो तरीका छ । संसारका वन्दनीय चरणका गदारूपी प्रहारले जसले शिष्यहरूको अज्ञानजन्य जडतालाई समूल नाश गरेर तत्काल कुण्डलिनी जागरण गराई षट्चक्रलाई जागृत गर्ने दुर्लभ सौभाग्य प्रदान गरेर साधकहरूको उपकार गर्ने अनौठो सामर्थ्यसम्पन्न हुनुहुन्छ; जसको तपोबल अतुलनीय छ तथा शिष्यहरूका प्रिय हुनुहुन्छ, यस्तो सौभाग्यशाली प्रहारको कामना गर्दै म उनै दिव्य महिमामण्डित गुरुदेवको शरण पर्दछु ।

जय गुरुदेव !

साबर संरचनाबाट प्राप्त

# दिव्य साधनात्मक सूत्रहरू

***मन्त्र साधनाको क्षेत्रमा अघि बढेर उच्चता हासिल गर्न चाहने सम्पूर्णका लागि अत्यन्त महत्त्वपूर्ण सूत्रहरू जसको अक्षरशः पालना गर्नाले मात्र सफलता प्राप्त हुन्छ, यस्ता दिव्यतम सूत्रहरू श्री सावर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा रचित ग्रन्थ 'मन्त्र साधना–ऊर्ध्वसंगति'को खण्ड घ (सावर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरू) पाठकवर्गको लाभार्थ क्रमशः प्रकाशित गर्दै आइरहेका छौँ। हामीलाई आशा एवं विश्वास छ, यी सूत्रहरूले यहाँहरूको साधनात्मक उच्चता प्राप्तिमा अवश्यमेव ठोस योगदान दिनेछन् ।***

**लगनशीलता** :

लगनशीलता प्रत्येक कार्यको सफलताको मेरुदण्ड हो । कुनै पनि कार्यको सफलताको लागि लगनशीलता अपरिहार्य हुन्छ। कुनै पनि कार्यको सफलताको लागि, लक्ष्य, उद्देश्य प्राप्तिको लागि निरन्तररूपमा लागिरहने, अगाडि बढिरहने, प्रयास प्रयत्न गरिरहने, अटुटरूपमा कोशिश गरिरहने प्रक्रियालाई सामान्य अर्थमा लगनशीलता भनिन्छ। यसरी लगनशीलता भन्नाले कार्य सफलताको लागि गरिने सम्पूर्ण क्रम एवं उपक्रमहरूलाई बुझिन्छ ।

संसारका चाहे भौतिक क्रियाकर्महरू हुन् चाहे आध्यात्मिक क्रियाकर्महरू हुन्, जुनसुकै क्षेत्रका भए पनि लगनशीलताबिना न त कार्य सफल हुन्छ, न त उद्देश्य प्राप्ति नै हुन्छ । यसैले आफ्नो उद्देश्य प्राप्ति गर्नु छ भने, आफ्नो लक्ष्यमा पुग्नु छ भने लगनशीलतालाई प्रत्येक व्यक्तिले अँगाल्नै पर्छ र अटुटरूपमा लाग्नैपर्दछ । बिना लगनशीलता कुनै लक्ष्य प्राप्तिको आशा राख्नु दिवास्वप्नजस्तै हो । जो व्यक्ति धैर्य नै नगरी अटुटरूपमा लाग्न सक्दैन, त्यस्ताका लागि सफलता दुष्कर मानिन्छ । धेरैजसो व्यक्तिहरू सफलता मात्रै खोज्दछन्, प्राप्तिको आशा मात्रै राख्दछन् तर कार्यमा लगनशील भएर लाग्दैनन्, मेहनत परिश्रम गर्दैनन् । यस्ता व्यक्तिहरूले सफलता प्राप्त गर्न सक्दै नन् । एउटा किसानले वर्षभरि दुःख गर्छ, अटुटरूपमा आफ्नो कार्यप्रति लगनशील बनिरहन्छ, तब मात्रै उत्पादन गर्न सक्छ, फल प्राप्ति गर्दछ । यस्तै एउटा विद्यार्थीले लगनशील भएर एक वर्ष अध्ययन गरिसकेपछि मात्र कक्षा उत्तीर्ण गर्दछ । यस्तै समाजका सम्पूर्ण क्षेत्रहरू सबै त्यस्तै छन् जहाँ लगनशीलताबिना प्राप्ति सम्भव हुँदैन, लक्ष्य प्राप्ति हुँदैन ।

मन्त्र साधनामा अगाडि बढ्नेहरूका लागि लगनशीलताको झनै खाँचो पर्दछ । साधना भनेकै लगनशीलताको पर्याय हो । जो व्यक्ति अटुटरूपमा अगाडि बढिरहन्छ, प्रयास प्रयत्न जारी राखिरहन्छ, उसैले सफलता हासिल गर्ने हो । त्यसैले पनि साधनामा अगाडि बढ्ने प्रत्येक व्यक्ति धैर्यवान् भई निरन्तररूपमा अगाडि बढ्नुपर्दछ । अध्यात्म क्षेत्र भनेको, साधना भनेको कुनै बाहिरी वस्तुजस्तो होइन जुन जति बेला चाहियो त्यति बेला पसलबाट खरीद गर्न सकियोस् । यो क्षेत्र भनेको त अटुटरूपमा लागिरहने विषय हो । जो व्यक्ति निश्चिन्त भएर, ढुक्क भएर अटुटरूपमा अगाडि बढिरहन्छ, उसैले अध्यात्म क्षेत्रमा, साधनात्मक क्षेत्रमा सफलता हासिल गर्दछ । मन्त्र साधना भनेकै प्राप्त मन्त्रलाई निरन्तररूपमा जप गर्ने प्रक्रिया हो, प्राप्ति नभएसम्म गरिरहने क्रिया हो । आफूले प्राप्त गरेको मन्त्र साधनामा दत्तचित्त भएर, लगनशील भएर जो लाग्दछ, उसैले प्राप्ति गर्दछ । त्यसैले नआत्तिकन, धैर्यवान् भएर, पूर्ण निष्ठाका साथ लगनशील हुनेहरू नै साधनामा सफलताका अधिकारी हुन्छन् ।

मन्त्र साधनामा त धेरैले भाग लिन्छन्, अगाडि बढ्ने चेष्टा पनि गर्छन्, प्राप्तिको आशा पनि राख्छन् तर बीचमा पुगेर धेरैले छाडिदिन्छन् । कसैले छिटो प्राप्तिको आशा राख्छन् तर लगनशील भएर अगाडि बढ्दैनन् । कति महत्त्वाकांछी हुन्छन् तर त्यही अनुसारको आफ्नो प्रयास प्रयत्न गर्दैनन्, बिना प्रयास प्रयत्न, बिना कोशिश, बिना लगाव, बिना लगनशीलता खाली छिटो प्राप्तिको आशा राख्नेहरू हतोत्साहित हुन्छन्, आत्तिन्छन् र साधनालाई यत्तिकै छोडिदिन्छन् अनि गुरु र देवीदेवताप्रति शंका व्यक्त गर्दछन्, आफूले प्राप्त गरेको मन्त्र साधनाप्रति अविश्वास गर्छन्, शंका उपशंका गर्दछन् र चाहिने नचाहिने टीका टिप्पणीतिर लाग्छन् । उनीहरूले प्राप्तिको नजिकै पुगेर पनि छोडिदिन्छन् तर आफ्नो गल्ती औंल्याउनेतर्फ लाग्दैनन् । मेरो लगनशीलता पुगेन, मैले जुन रूपमा गर्नुपर्ने हो, त्यस रूपमा गर्न सकिन भन्ने कहिल्यै सोच्दैनन् ।

त्यसैले मन्त्र साधनामा अगाडि बढ्ने प्रत्येक व्यक्तिले आफ्नो मानसिकतालाई सधैँ बलियो बनाउनुपर्दछ, धैर्य र संयम राखी निरन्तररूपमा अगाडि बढिरहनुपर्दछ, अनि मात्रै मन्त्र साधनालाई सफल बनाउन सकिन्छ । विश्वासलाई दह्रो बनाई प्रतिकूल परिस्थिति सिर्जना भए पनि आफ्नो निरन्तर प्रयासलाई जारी राख्नुपर्दछ, अनि मात्रै प्राप्तिको नजिक पुग्न सकिन्छ । त्यसैले लगनशीलतालाई पूर्णरूपले अँगालौँ, मन्त्र साधनामा सफलता प्राप्त गरौँ । जय गुरुदेव !

तपाईँलाई कत्तिको चिन्ता लाग्छ भन्ने प्रश्न यदि कसैलाई सोध्ने हो भने अधिंकाश व्यक्तिहरुको मुखबाट 'हामीलाई चिन्ता यति धेरै लाग्छ कि चिन्ताले नै चितामा पुऱ्याउन लागिसक्यो' भन्ने जवाफ पाउछौँ । आज चिन्तारहित मानिस हाम्रो समाजमा पाउनै दुर्लभ भइसकेको छ । चिन्ता पनि बडो अनौठो नै हुन्छ । चिन्ता नलागोस् भनेर मान्छे दिनरात खट्छ, दिनरात मेहनत गर्छ, चिन्ता हटोस् भनेर मानिसले आफ्नो सम्पूर्ण समय चिन्ता भगाउनकै लागि खर्च गर्छ, अनेक प्रयास प्रयत्न गर्छ । तैपनि चिन्ता भन्ने कुरा हट्नुको सट्टा, घट्नुको सट्टा झन् बढ्दै जान्छ, झन् थपिँदै जान्छ । एकपछि अर्को, अर्को पछि झन् अर्को गर्दै चिन्ताको बढ्ने क्रम जीवनको विकासक्रम सँगसँगै बढ्दै आइरहेको कटु सत्यबाट हामी सबै जानकार छौँ, सधैँ चिन्तित छौँ, कुनै न कुनै विषयवस्तुले हामीलाई चिन्ताग्रस्त बनाइरहेकै छ । यस्तो हुँदा पनि चिन्ताबाट छुटकारा पाउने माध्यम के होला भनेर कहिल्यै चिन्तन, मनन गर्ने स्वभावको, बानीको विकास हामीमा भएको पाइँदैन । चिन्ता लाग्यो भनेर चिन्ता गरिदिँदा झनै चिन्तामाथि चिन्ता थपिँदै जाने, अन्ततो गत्वा चिन्ताले नै चितामा पुऱ्याउने गरेको हामीले प्रत्येक दिन देखिरहेका छौँ, सुनिरहेका छौँ, भोगिरहेका छौँ । आखिर के हो त यो चिन्ता, किन लाग्छ त यो चिन्ता, के मानिस यही चिन्तामै हराउनका लागि, चिन्तै चिन्तामा बाँच्नको लागि जन्मेको हो त ? परमात्माले तपाईँ हामीलाई सधैँ चिन्तित हुनका लागि नै पृथ्वीतटमा पठाउनु भएको हो त ? यो प्रश्न तपाईँको मनमा कहिल्यै उब्जेको छ ? यदि उब्जेको छ भने अब तपाईँले चिन्ता हटाउने मार्ग प्राप्त गर्ने लक्षण देखा परेको छ, यदि कहिल्यै यो चिन्तन गर्नुभएको छैन भने अझै तपाईँ चिन्ताग्रस्त हुनुहुनेछ किनकि जो मानिसले रोग लागिसकेपछि रोगको औषधि खाएर मात्र उपचार गर्छ त्यसलाई त्यही रोग फेरि फेरि बल्झिने सम्भावना उत्तिकै रहन्छ । तर यदि उसले त्यो रोगलाई जरैदेखि उन्मूलन गर्नुपर्छ भन्ने सोच राखेर त्यो रोगको कारण पत्ता लगाएर त्यस कारणलाई नै समूलरुपमा नष्ट गरिदियो भने ऊ फेरि फेरि त्यस रोगबाट पीडित हुँदैन । त्यस्तै चिन्ता लाग्यो भनेर कुनै विषयवस्तुमाथि मात्रै केन्द्रित भएर त्यो विषयवस्तुलाई चिन्ताको कारण ठानेर त्यसबाट मात्रै टाढा जाँदा चिन्ता हट्दैन, हटेको पनि छैन । यदि हटिहाल्यो भने पनि फेरि अर्को विषयवस्तु तपाईँ हाम्रो अगाडि आउँछ । चिन्ता ल्याउनको लागि त कुनै विषयवस्तु नै चाहिँदैन । केही भए पनि चिन्ता केही नभए पनि चिन्ता । हाम्रो समाजमा हेर्नुस् न, जसका छोराछोरी हुँदैन उसलाई छोराछोरी नभएर चिन्ता छ, जसको छोराछोरी छ उनीहरु पनि छोराछोरी बिग्रिए, कपूत भए, राम्रो बाटोमा लागेनन् भनेर झनै चिन्ता छ । पैसा नहुनेलाई पैसा भएन भनेर चिन्ता छ, पैसा धेरै हुनेलाई लुट्ला कि, हराउला कि, करले समाउला कि, कहीँ जाँदा पैसा अर्काले खोस्ला कि भन्ने चिन्ता छ । त्यसैले यो चिन्ताको कारण के ? हुनु चिन्ता हो कि नहुनु चिन्ता हो ? प्रश्न यहाँनिर उब्जन्छ । कुनै पनि कुरा जुन तपाईँसँग छैन त्यो प्राप्त गर्नका लागि तपाईँ चिन्तित हुनुहुन्छ, प्रयत्नशील हुनुहुन्छ । जब तपाईँको हातमा त्यो कुरा आउँछ त्यसपछि तपाईँले त्यसको चिन्ता छाडेर अर्को चीज प्राप्त गर्न फेरि चिन्ता गर्न थाल्नुहुन्छ । त्यसैले यो चिन्ता त कहिल्यै हट्दैन । जीवन रहुञ्जेलसम्म एकपछि अर्को, अर्कोपछि अर्को गरेर आइनै रहन्छ । त्यसो भए के मानिस चिन्ताबाट कहिल्यै मुक्त हुन सक्तैन त ? यो जीवनलाई चिन्तै चिन्तामा डुबाएर ऊ मर्छ त ? होइन, यो प्रश्नको जवाफमा भन्नुपर्ने हुन्छ कि मानिस चिन्ताबाट मुक्त हुन सक्छ यदि उसले सद्‌गुरुको साथ पाएको छ भने । जीवनमा सद्‌गुरुलाई चिनेर उहाँको चरणमा समर्पित हुँदै गुरु आज्ञाअनुसार आफ्नो जीवनलाई अगाडि बढाएको छ भने त्यस्तो व्यक्ति कहिल्यै चिन्तित हुँदैन । उसको जीवनमा अनेकौँ प्रकारका दुःख, कष्ट, बाधा, व्यवधान आउन सक्छन् तर ती दुःख कष्टले पनि ऊ चिन्तित हुँदैन । जसलाई गुरुकृपा, आशीर्वाद प्राप्त हुन्छ, जो गुरुसँग जोडिएको हुन्छ त्यस्तो व्यक्तित्वमा एउटा क्षमता विकास हुन्छ जसलाई 'समभाव' भनेर शास्त्रले वर्णन गरेको छ । समको तात्पर्य हो समान अवस्थामा बस्नु अथवा यसलाई यसरी बुझौँ भए पनि ठीक नभए पनि ठीक, खाए पनि ठीक नखाए पनि ठीक, लाए पनि ठीक नलाए पनि ठीक जुनसुकै अवस्थामा पनि समान भावमा बस्नु समभाव हो । यही समभावले नै मानिसलाई उच्चतामा पुऱ्याउँछ, मानिसलाई मुक्तिको मार्गतिर डोऱ्याउँछ । त्यसैले शास्त्रले पनि भनेको छ कि मानिसले जस्तोसुकै आपत विपत परे पनि, जस्तोसुकै खुशी छाए पनि जस्तोसुकै ठूलो कुरा प्राप्त भए पनि समभावमा बस्न सकियो भने त्यो मानिस महान् बन्दछ । जीवनमा दुःख, सुख अपरिहार्य छ । दुःखपछि सुख आउँछ, सुख पछि दुःख आउँछ । तर दुःखमा नआत्तिने र सुखमा नमात्तिने मानिस नै वास्तवमा सही मानिस ठहर्दछ र उसले नै चिन्तामाथि विजय प्राप्त गर्न सक्दछ । चिन्ता चिन्तै गरेर हट्दैन । चिन्तालाई हटाउनका लागि चिन्तन गर्नुपर्दछ, ध्यान गर्नुपर्दछ, मनन गर्नुपर्दछ, साधना गर्नुपर्दछ र सद्‌गुरुको सान्निध्यता प्राप्त गरेर जीवनलाई धन्य बनाउनु पर्दछ । यी कुरा कोरा काल्पनिक अथवा पौराणिक ग्रन्थमा उल्लेख गरिएका कुरालाई उद्धृत गरिएका मात्र होइनन् । यो त प्रयोग गरेर अनुभव गरेर अभिव्यक्त गरिएका कुराहरु हुन् । त्यसैले तपाईँ पनि यदि चिन्तारहित जीवन जिउन चाहनुहुन्छ, समभावमा रहेर सधैँ समानरुपमा जीवनलाई अघि बढाउन चाहनुहुन्छ, आनन्द, शान्ति, उत्साहका साथ जीवन जिउन चाहनुहुन्छ भने आउनुहोस् श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई सद्‌गुरुको रुपमा धारण गर्दै उहाँहरुले देखाउनुभएको मार्गमा आफूलाई अगाडि बढाउने संकल्प गर्नुहोस् । तपाईँ आँट्नुस् मात्रै, गुरुले पुऱ्याउनुहुन्छ । तपाईँ प्रयास गर्नुहोस्, प्रयत्न गर्नुहोस्, सिद्धाश्रम शक्ति केन्द्र सदैव तपाईँलाई साथ दिन तयार छ ।

जीवनको कुनै ठेगान छैन । आज हो कि भोलि, कसैले ग्यारेन्टी दिन सक्दैन । त्यसैले यो मनुष्य जीवन छँदै यो कुरालाई बुझेर सद्‌गुरुको साथ प्राप्त गर्दै अगाडि बढौँ र जीवनलाई धन्य बनाऔँ ।

अस्तु ।